भावार्थः- उत्तराषाढा, स्वाती, श्रवण, तीनै पूर्वा, अनुराधा, धनिष्ठा र कृत्तिका नक्षत्रमा वा विवाहविहीत नक्षत्रमा पहिले वस्त्र, आभूषण, द्रव्य, फल, पुष्प आदिले कन्यालाई सन्तुष्ट पारी त्यसपछि मात्र कन्याको वरण गर्नू ।

### वरवरणको मुहूर्त्त

**धरणिदेवोऽथवा कन्यकासोदरः शुभदिने गीतवाद्यादिभिः संवृ(यु)तः ।**
**वरवृतिं वस्त्रयज्ञोवीतादिना ध्रुवयुतैर्वह्निपूर्वात्रयैराचरेत् ॥११॥**

भावार्थः- ध्रुवसंज्ञक, कृत्तिका र तीनै पूर्वा नक्षत्र परेको शुभ दिनमा ब्राह्मण,कन्याको आफ्नै दाजुभाई आदिले गानबजान आदि माङ्गलिक वातावरणमा वस्त्र, जनै, फल, मेवा, दक्षिणा, पात्र, अक्षता, नरिवल, सुपारी, सेतो चन्दन र वेसार आदिले वरको वरण गर्नू ।



### विवाह गर्ने उमेर

**गुरुशुद्धिवशेन कन्यकानां समवर्षेषु षडब्दकोपरिष्टात् ।**
**रविशुद्धिवशाच्छुभो वराणामुभयोश्चन्द्रविशुद्धितो विवाहः ॥१२॥**

भावार्थः- कन्या जन्मेको ६ वर्षको उमेर पछिका ८।१०।१२ जोर वर्षमा नछुनी हुनुभन्दा अगाडि बृहस्पतिको शुद्धि गरेर एवं वरको सूर्य शुद्धि गरेर बिजोर वर्षमा तथा दुवैको चन्द्र शुद्धि गरी विवाह गर्नु उत्तम हुन्छ ।

### विवाह गर्न नहुने महिना

**मिथुनकुम्भमृगालिवृषाजगे मिथुनगेऽपि रवौ त्रिलवे शुचेः ।**
**अलिमृगाजगते करपीडनं भवति कार्त्तिकपौषमधुष्वपि ॥१३॥**

भावार्थः- मिथुन, कुम्भ, मकर, वृश्चिक, वृष र मेष राशिको सूर्यमा विवाह उत्तम हुन्छ । मिथुन राशिको सूर्यमा आषाढको पहिलो तृतीयांश अर्थात् आषाढशुक्ल परेवा देखि दशमीसम्म विवाह हुन्छ । हरिशयनी भन्दा पछि मिथुनको सूर्य हुँदाहुँदै पनि विवाह गर्न हुँदैन । वृश्चिकमा सूर्य भए कार्तिकमा, मकरका सूर्य भए पुषमा र मेषमा सूर्य भए चैत्रमा विवाह उत्तम हुन्छ । (अर्थात् विवाहमा सौरमासको प्रमुखता हुन्छ चन्द्रमासको होइन) ।



### विवाह गर्दा केटाकेटीको जन्ममास, जन्मनक्षत्र, जन्मतिथि बार्नुपर्ने

**आद्यगर्भसुतकन्ययोर्द्वयोर्जन्ममासभतिथौ करग्रहः ।**
**नोचितोऽथ विबुधैः प्रशस्यते चेद् द्वितीयजनुषोः सुतप्रदः ॥१४॥**

भावार्थः- वर वा कन्या दुवै यदि पहिलो गर्भबाट जन्मेका भए जन्म महिना, जन्म नक्षत्र र जन्म तिथिमा विवाह गर्नु उचित हुँदैन । यदि दुवै दोश्रो गर्भबाट जन्मेका भए दुवैको जन्ममास आदिमा गरिने विवाह चने पुत्र जन्माउने हुन्छ । यस्तो पण्डितहरुको राय छ ।

## गर्भले जेठाजेठीको विवाह जेठमा नगर्नू

**ज्येष्ठद्वन्द्वं मध्यमं सम्प्रदिष्टं त्रिज्येष्ठं चेन्नैव युक्तं कदापि ।**
**केचित्सूर्यं वह्निगं प्रोज्झ्य चाहुऽऽनैवान्योऽन्यं ज्येष्ठयोः स्याद्विवाहः ॥१५॥**

भावार्थः- विवाहमा जेठ महिना र जेठो वर वा जेठी कन्या मध्ये कुनै दुई मध्यम हुन्छ । तीनै ज्येष्ठ कहिल्यै ठीक हुँदैन । कुनै कुनै आचार्यले कृत्तिकाका सूर्यलाई छोडी विवाह गर्नू तर वरवधु दुवै जेठो हुँदा कुनै हालतमा विवाह नगर्नु भनेका छन् ।

## विवाह आदिका विशेष नियम

**सुतपरिणयात् षण्मासान्तः सुताकरपीडनं**
**न च निजकुले तद्वद्वा मण्डनादपि मुण्डनम् ।**
**न च सहजयोर्देये भ्रात्रोः सहोरदकन्यके**
**न सहजसुतोद्वाहोऽब्दार्धे शुभे न पितृक्रिया ॥१६॥**

भावार्थः- आफ्नो कुलमा (३ पुस्ता भित्र) छोराको विवाह गरेपछि ६ महिनासम्म छोरी (वा सहोदर भाई) को विवाह नगर्नू । आफ्नो कुलमा (३ पुस्ता भित्र) कुनै छोरा वा छोरीको विवाह गरेको छ महिना भित्र कसैको मुण्डन (व्रतबन्ध) नगर्नू । सहोदर दाजुभाईलाई सहोदरा दिदीबहिनी नदिनू । दुई सहोदर दाजुभाईको वा दिदीबहिनीको विवाह ६ महिना भित्र नगर्नू । (जुम्ल्याहा भए दुवैको समान संस्कार एकै दिन वा एउटै मण्डपमा हुन भने सक्दछ) । शुभकर्मका बेलामा पितृश्राद्ध गर्नु वा पार्नु हुँदैन ।

### विवाहमा अग्निस्थापना भएपछि हुने भवितव्य

**वध्वा वरस्यापि कुले त्रिपूरुषे नाशं व्रजेत्कश्चन निश्चयोत्तरम् ।**
**मासोत्तरं तत्र विवाह इष्यते शान्त्याऽथवा सूतकनिर्गमे परैः ॥१७॥**

भावार्थः- विवाहको निश्चय भए पछि केटा वा केटीको कुलमा तीन पुस्ताभित्र यदि कसैको मृत्यु भएमा त्यसको एक महिना पछि विवाह गर्नु उचित हुन्छ । (मेधातिथि) आदि आचार्यले भने आवश्यकता हुँदा मरणाशौच बितेपछि शान्ति गरेर विवाह गर्नु पर्ने बताएका छन् ।

**चूडाव्रतं चापि विवाहतो व्रताच्चूडा च नेष्टा पुरुषत्रयान्तरे ।**
**वधूप्रवेशाच्च सुताविनिर्गमः षण्मासतो वाऽब्दविभेदतः शुभः ॥१८॥**



भावार्थः- कुलमा ३ पुस्ताभित्र विवाहपछि चूडाकर्म वा उपनयन नगर्नू तथा व्रतबन्धपछि चूडाकर्म नगर्नू । बुहारी भित्र्याएको ६ महिनासम्म कन्या(छोरी)लाई पतिको घर पनि नपठाउनू । तर वर्ष फेरिएमा भने ६ महिना भित्र उपरोक्त कार्य गर्दा पनि उत्तम हुन्छ ।

### खराब नक्षत्रमा जन्मिएका वरवधुको फल

**श्वश्रूविनाशमहिजौ सुतरां विधत्तः कन्यासुतौ निर्ऋतिजौ श्वशुरं हतश्च ।**
**ज्येष्ठाभजाततनया स्वधवाग्रजञ्च शक्राग्निजा भवति देवरनाशकर्त्री ॥१९॥**
**द्वीशाद्यपादत्रयजा कन्या देवरसौख्यदा ।**
**मुलान्त्यपादसार्पाद्यपादजातौ तयोः शुभौ ॥२०॥**

भावार्थः- अश्लेषामा जन्मेका वर-कन्याले सासूलाई, मूलमा जन्मेका वर-कन्याले ससुरालाई, ज्येष्ठामा जन्मेकी कन्याले जेठो जेठाजूलाई र विशाखामा जन्मेकी कन्याले देवर नाश गर्दछे । विशाखाको प्रथम ३ चरणमा जन्मिने कन्याले देवरलाई सुख दिन्छे । मूलको चौथो चरणमा जन्मिने कन्या वा वरले ससुरालाई तथा अश्लेषाको प्रथम चरणमा जन्मिने कन्या वा वरले सासूलाई सुख दिन्छन् ।

विवाहमा जुराउने कुराहरु

**वर्णो वश्यं तथा तारा योनिश्च ग्रहमैत्रकम् ।**
**गणमैत्रं भकूटं च नाडी चैते गुणाधिकाः ॥२१॥**

भावार्थः- वर्ण, वश्य, तारा, योनि, ग्रहमैत्री, गण, भकूट र नाडी : यी ८ कूटहरु वरवधु मिलाउँदा हेरिने गरिन्छ । यिनमा क्रमशः एक बाट शुरु भई १-१ गुण बढी हुने बताइएको छ ।

विवाहमा वर्ण जुराउने कार्य

**द्विजा झषालिकर्कटास्ततो नृपा विशोऽङ्घ्रिजाः ।**
**वरस्य वर्णतोऽधिका वधूर्न शस्यते बुधैः ॥२२॥**

भावार्थः- मीन-वृश्चिक र कर्कटको ब्राह्मण, मेष-धनु र सिंहको क्षत्रिय, वृष-मकर र कन्याको वैश्य तथा मिथुन-कुम्भ र तुलाको वर्ण शूद्र हो । वरको भन्दा वधूको वर्ण उच्च भए त्यस्ती वधू शुभ हुन्न ।

वर्ण जान्ने तालिका र गुण संख्या

| कन्यावर्ण | वरवर्ण | | | |
|---|---|---|---|---|
| | ब्राह्मण (मीन,कर्कट र वृश्चिक) | क्षत्रिय (मेष, सिंह र धनु) | वैश्य (वृष, कन्या र मकर) | शूद्र (मिथुन, तुला र कुम्भ) |
| ब्राह्मण (मीन,कर्कट, वृश्चिक) | १ (शुभ) | ० (अशुभ) | ० (अशुभ) | ० (अशुभ) |
| क्षत्रिय (मेष, सिंह र धनु) | १ (शुभ) | १ (शुभ) | ० (अशुभ) | ० (अशुभ) |
| वैश्य (वृष, कन्या र मकर) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) | ० (अशुभ) |
| शूद्र (मिथुन, तुला र कुम्भ) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) |

**विवाहमा वश्य जुराउने कार्य**

**हित्वा मृगेन्द्रं नरराशिवश्याः सर्वे तथैषां जलजास्तु भक्ष्याः ।**
**सर्वेऽपि सिंहस्य वशे विनालिं ज्ञेयं नराणां व्यवहारतोऽन्यत् ॥२३॥**



भावार्थः- सिंह बाहेकका सबै राशिहरु मनुष्य राशिका वशमा हुन्छन् त्यसमध्ये पनि जलचर राशि मनुष्य राशिका भक्ष्य पनि हुन्छन् । वृश्चिकलाई छाडी सबै राशि सिंह राशिको वशमा हुन्छन् भनी मानिएको छ । वरका लागि कन्या वश्य वा भक्ष्य हुनु उचित हुन्छ ।

| वश्य जान्ने तालिका र गुण संख्या | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| वरराशि / कन्याराशि | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
| मेष | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| वृष | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| मिथुन | ० | ० | ० | ० | २ | ० | ० | ० | २ | ० | ० | ० |
| कर्कट | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| सिंह | ० | ० | ० | ० | २ | ० | ० | ० | ० | ० | ० | ० |
| कन्या | ० | ० | ० | ० | २ | ० | ० | ० | ० | ० | ० | ० |
| तुला | ० | ० | ० | ० | २ | ० | ० | ० | ० | ० | ० | ० |
| वृश्चिक | ० | ० | २ | ० | ० | २ | २ | ० | २ | ० | ० | ० |
| धनु | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| मकर | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| कुम्भ | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |
| मीन | ० | ० | २ | ० | २ | २ | २ | ० | २ | ० | ० | ० |

### विवाहमा तारा जुराउने कार्य



**कन्यर्क्षाद्वरभं यावत् कन्याभं वरभादपि ।**
**गणयेन्नवहृच्छेषे त्रीष्वद्रिभमसत्स्मृतम् ॥२४॥**

भावार्थः- कन्याको नक्षत्रबाट वरको नक्षत्रसम्म र वरको नक्षत्रबाट कन्याको नक्षत्रसम्म गन्दा आउने अङ्कलाई दुई छुट्टै ठाउँमा राखी ९ ले भाग गर्नू । ३, ५ र ७ शेष रहे तारा शुभ हुँदैन १, २, ४, ६, ८ र ९ शेष रहे तारा शुभ हुन्छ ।

### विवाहमा योनि जुराउने कार्य

**अश्विन्यम्बुपयोर्हयो निगदितः स्वात्यर्कयोः कासरः**
**सिंहो वस्वजपाद्भयोः समुदितो याम्यान्त्ययोः कुञ्जरः ।**

**मेषो देवपुरोहितानलभयोः कर्णाम्बुनोर्वानरः**
**स्याद् वैश्वाभिजितोस्तथैव नकुलश्चान्द्राब्जयोन्योरहिः ॥२५॥**
**ज्येष्ठामैत्रभयोः कुरङ्ग उदितो मूलार्द्रयोः श्वा तथा**
**मार्जारोऽदितिसार्पयोरथ मघायोन्योस्तथैवोन्दुरुः ।**
**व्याघ्रो द्वीशभचित्रयोरपि च गौरर्यम्णबुध्न्यर्क्षयो-**
**र्योनिः पादगयोः परस्परमहावैरं भयोन्योस्त्यजेत् ॥२६॥**

भावार्थः- अश्विनी र शतभिषाको योनी घोडा, स्वाती र हस्ताको भैंसी, धनिष्ठा र पूर्व भाद्रपदाको सिंह, भरणी र रेवतीको हाती, पुष्य र कृत्तिकाको भेडा, श्रवण र पूर्वाषाढाको वानर, उत्तराषाढा र अभिजित्को न्याहुरीमुसो, रोहिणी र मृगशिराको सर्प, ज्येष्ठा र अनुराधको मृग, मूल र आर्द्राको कुकुर, पुनर्वसु र अश्लेषाको बिरालो, मघा र फूर्वाफाल्गुनीको मुसा, विशाखा र चित्राको बाघ तथा उत्तरभाद्रपदा र उत्तराफाल्गुनीको गाई योनी हुन्छ । यिनमा शुरु देखिका जोर योनीको ठूलो शत्रुता हुन्छ र योनी विचारमा निन्दनीय हुन्छ । (घोडा-भैंसी, सिंह-हाती, भेडा-वानर, न्याहुरीमुसो-सर्प, मृग-कुकुर, बिरालो-मुसो, बाघ-गाई) ।

विवाहमा ग्रहमैत्री जुराउने कार्य

**मित्राणि द्युमणेः कुजेज्यशशिनः शुक्रार्कजौ वैरिणौ ।**
**सौम्यश्चास्य समो विधोर्बुधरवी मित्रे न चास्य द्विषत् ॥**
**शेषाश्चास्य समाः कुजस्य सुहृदश्चन्द्रेज्यसूर्या बुधः ।**
**शत्रुः शुक्रशनी समौ च शशभृत्सूनोः हिसताहस्करौ ॥२७॥**
**मित्रे चास्य रिपुः शशी गुरुशनिक्ष्माजाः समा गीष्पते- ।**

**मित्राण्यर्ककुजेन्दवो बुधसितौ शत्रू समः सूर्यजः ॥**
**मित्रे सौम्यशनी कवेः शशिरवी शत्रू कुजेज्यौ समौ ।**
**मित्रे शुक्रबुधौ शनेः शशिरविक्ष्माजा द्विषोऽन्यःसमः ॥२८॥**

भावार्थः- सूर्यका चन्द्र-मङ्गल-बृहस्पति मित्र, शुक्र-शनि शत्रु र बुध सम हुन् । चन्द्रका बुध-सूर्य मित्र र बाँकी सबै ग्रह सम हुन्, शत्रु कुनै छैन । मङ्गलका चन्द्र-बृहस्पति-सूर्य मित्र, बुध शत्रु र शुक्र-शनि सम हुन् । बुधका शुक्र-सूर्य मित्र, चन्द्र शत्रु र गुरु-शनि-मङ्गल सम हुन् । बृहस्पतिका सूर्य-मङ्गल-चन्द्र मित्र, बुध-शुक्र शत्रु र शनि सम हुन् । शुक्रका बुध-शनि मित्र, सूर्य-चन्द्र शत्रु र मङ्गगल-बृहस्पति सम हुन् । त्यस्तै, शनिका बुध-शुक्र मित्र, चन्द्रमा-सूर्य-मङ्गल शत्रु र बृहस्पति सम हुन् ।



| ग्रह | रवि | सोम | भौम | बुध | गुरु | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| **मित्र ग्रह** | चं.मं.बृ. | सू.बु. | सू.च.बृ. | सू.शु. | सू.च.मं. | बु.श. | बु.शु. |
| **सम ग्रह** | बुध | मं.बृ.शु.श. | मं.शु.श. | मं.बृ.श. | श. | मं.बृ. | बृ. |
| **शत्रु ग्रह** | शु.श. | - | बु. | च. | बु.शु. | सू.च. | सू.च.मं. |
| **राशि** | सिंह | कर्कट | मेष, वृश्चिक | मिथुन, कन्या | धनु, मीन | वृष, तुला | मकर, कुम्भ |

**गणकूट**

**रक्षोनरामरगणाः क्रमतो मघाहिवस्विन्द्रमूलवरुणानलतक्षराधाः ।**
**पूर्वोत्तरात्रयविधातृयमेशभानि मैत्रमदितीन्दु हरिपौष्णमरुल्लघूनि ॥२९॥**

भावार्थः- मघा, अश्लेषा, धनिष्ठा, ज्येष्ठा, मूल, शतभिषा, कृत्तिका, चित्रा र विशाखा : यी नौ नक्षत्र राक्षसगण नक्षत्र हुन् । तीन वटै पूर्वा, तीन वटै उत्तरा, रोहिणी,

भरणी र आर्द्रा : यी नौ नक्षत्र मनुष्यगण नक्षत्र हुन् । अनुराधा, पुनर्वसु, मृगशिरा, श्रवण, रेवती, स्वाती, अश्विनी, हस्ता र पुष्य : यी नौ नक्षत्र देवतागण नक्षत्र हुन् ।

**निजनिजगणमध्ये प्रीतिरत्युत्तमा स्यादमरमनुयोः सा मध्यमा सम्प्रदिष्टा ।**
**असुरमनुजयोश्चेन्मृत्युरेव प्रदिष्टो दनुजविशुधयोः स्याद्वैरमेकान्ततोऽत्र ॥३०॥**

भावार्थः- वर र कन्याका जन्मनक्षत्र एउटै गणका भए ती दुईको विवाह हुँदा दुईका बीचमा अति नै मायाप्रीति हुन्छ । वरकन्यामध्ये एउटाको जन्मनक्षत्र देवतागणको र अर्कोको जन्मनक्षत्र मनुष्यगणको भए मध्यम खालको मायाप्रीति हुन्छ । वरकन्यामध्ये एउटाको जन्मनक्षत्र राक्षसगणको र अर्कोको जन्मनक्षत्र मनुष्यगणको भए वर वा कन्याको मरण हुन्छ ।  वरकन्यामध्ये एउटाको जन्मनक्षत्र देवतागणको र अर्कोको जन्मनक्षत्र राक्षसगणको भए दुईका बीचमा सधैं झगडा हुन्छ ।

### भकुट

**मृत्युः षष्ठाष्टके ज्ञेयोऽपत्यहानिर्नवात्मजे ।**
**द्विर्द्वादशे निर्धनत्वं द्वयोरन्यत्र सौख्यकृत् ॥३१॥**
**प्रोक्ते दुष्टभकूटके परिणयस्त्वेकाधिपत्ये शुभो-**
**ऽथो राशीश्वरसौहृदयेपि गदितो नाड्यृक्षशुद्धिर्यदि ।**
**अन्यर्क्षेऽशपयोर्बलित्वसखिते नाड्यृक्षशुद्धौ तथा**
**ताराशुद्धिवशेन राशिवशताभावे निरुक्तो बुधैः ॥३२॥**
**मैत्र्यां राशिस्वामिनोरंशनाथद्वन्द्वस्यापि स्याद् गणानां न दोषः ।**

खेटारित्वं नाशयेत् सद्भकूटं खेटप्रीतिश्चापि दुष्टं भकूटम् ॥३३॥

भावार्थः- वर र वधुको राशि आपसमा ६-८ भए विवाह मृत्युकारक हुन्छ । ९-५ भए सन्तानको हानी हुन्छ । २-१२ भए दम्पत्ति निर्धन हुन्छन् । अरु सबै शुभ हुन्छ । दुष्टभकूटमा यदि वर-कन्याको राशिस्वामी एउटै भई नाडी शुद्ध भए विवाह शुभ हुन्छ । वर-कन्याको राशिमा परस्परमा मित्रता छ र नाडी शुद्ध छ भने विवाह शुभ हुन्छ । अन्यर्क्षमा राशिस्वामीको समतामा पनि दुवैको नवांशका मालिकमा मित्रता छ र अंशको मालिक भई नाडी शुद्ध छ भने विवाह शुभ हुन्छ । वर-कन्या दुवैको तारा उत्तम भई नाडी शुद्ध भए विवाह शुभ हुन्छ । राशिवश्यता हुँदाहुँदै पनि नाडी शुद्ध भए विवाह शुभ हुन्छ । वर-कन्याको दुवैको राशिस्वामीमा आपसमा मित्रता भए वा दुवैको नवमांश स्वामीको मित्रता भएमा गणको दोष हुँदैन । उत्तम भकूट भए ग्रहमैत्रीजन्य दोष नष्ट हुन्छ भने ग्रहमैत्री उत्तम भए दुष्ट भकूटको दोष नष्ट हुन्छ ।



नाडी-नक्षत्र

ज्येष्ठारौद्रार्यमाम्भः पतिभयुगयुगं दास्रभं चैकनाडी
पुष्येन्दुत्वाष्ट्रमित्रान्तकवसुजलभं योनिबुध्न्ये च मध्या ।
वाय्वग्निव्यालविश्वोडुयुगयुगमथो पौष्णभं चापरा स्याद्
दम्पत्योरेकनाड्यां परिणयनमसन्मध्यनाड्यां हि मृत्युः ॥३४॥

भावार्थः- ज्येष्ठा र मूल, आर्द्रा र पुनर्वसु, उत्तराफाल्गुनी र हस्ता, शतभिषा र पूर्वभाद्रपदा अनि अश्विनी : यी नौ नक्षत्र आदिनाडी नक्षत्र हुन् । पुष्य, मृगशिरा, चित्रा, अनुराधा, भरणी, धनिष्ठा, पूर्वाषाढा, पूर्वाफाल्गुनी र उत्तरभाद्रपदा : यी नौ

नक्षत्र मध्यनाडी नक्षत्र हुन् । स्वाती, विशाखा, कृत्तिका, रोहिणी, अश्लेषा, मघा, उत्तराषाढा, श्रवण र रेवती : यी नौ नक्षत्र अन्त्यनाडी नक्षत्र हुन् ।

### विवाहमा वरवधूको नाम-वर्ग जुराउने काम

**अकचटतयशवर्गाः खगेशमार्जारसिंहशुनाम् ।**
**सर्पाऽऽखुमृगावीनां निजपञ्चमवैरिणामष्टौ ॥३५॥**

भावार्थः- अवर्गका स्वामी गरुड, कवर्गका बिरालो, चवर्गका सिंह, टवर्गका कुकुर, तवर्गका सर्प, पवर्गका मुसा, य-र-ल-व का स्वामी मृग र श-ष-स-ह का स्वामी भेडा हुन्छन् । वर्गबाट पाँचौं वर्ग वर्गशत्रु हुन्छ । (यो वर्ग-विचार वर-वधू, मनुष्यको मित्रता, स्वामि-सेवक, गृह-प्रवेश र गाउँशहरका निवासीमा गर्नुपर्दछ ।



### वरवधुको राशि आदिमा समानता हुँदाको फल

**राश्येके चेद्भिन्नमृक्षं द्वयोः स्यान्नक्षत्रैक्ये राशियुग्मं तथैव ।**
**नाडीदोषो नो गणानां च दोषो नक्षत्रैक्ये पादभेदे शुभं स्यात् ॥३६॥**

भावार्थः- यदि वधू र वरको जन्मराशि एउटै र जन्मनक्षत्र फरक फरक छ भने अथवा जन्मनक्षत्र एउटै भएर जन्मराशि फरक फरक छ भने त्यस अवस्थामा नाडीदोष, गणदोष र तारादोष हुँदैन, शुभ हुन्छ ।

## नवांश

**कुजशुक्रसौम्यशशिसूर्यचन्द्रजाः कविभौमजीवशनिसौरयो गुरुः ।**
**इह राशिपाः क्रियमृगास्यतौलिकेन्दुभतो नवांशविधिरुच्यते बुधैः ॥३७॥**

भावार्थः- मङ्गल , शुक्र, बुध, चन्द्रमा, सूर्य, बुध, शुक्र, भौम, गुरु, शनि, शनि र बृहस्पति क्रमैले १२ राशिका स्वामी हुन्छन् । मेष, मकर, तुला र कर्कटबाट मेष आदि राशिको नवांश थाहा पाउने तरिका पण्डितजनले बताएका छन् ।

नवांश जान्ने तरिकाः-

मेष राशिमा मेषदेखि धनुसम्मका ९ नवमांश, वृष राशिमा मकरदेखि कन्यासम्म ९ नवमांश, मिथुन राशिमा तुलादेखि मिथुनसम्म ९ नवमांश, कर्कट राशिमा कर्कटदेखि मीनसम्म ९ नवमांश हुन्छन् । फेरी सिंहभन्दा पछाडि सबै राशिमा यसैगरी गन्नु पर्दछ । अर्थात् मेष, सिंह र धनु राशिमा मेषदेखि धनुसम्म ९ नवमांश; वृष, कन्या, र मकर राशिमा मकरदेखि कन्यासम्म ९ नवमांश; मिथुन, तुला र कुम्भराशिमा तुलादेखि मिथुनसम्म ९ नवमांश तथा कर्कट, वृश्चिक र मीन राशिमा कर्कटदेखि मीनसम्म ९ नवमांश हुन्छन् । प्रत्येक राशिमा ३० अंश हुन्छ । नवमांश नवौं भागलाई भनिन्छ । यसैले ३० अंशको नवौं भाग ३ अंश २० कलाको प्रत्येक नवमांश हुन्छ ।

| १-नवांशसारणी | | | | | | | | | | | | नवांश | २-नवांशसारणी | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन | अंशकाल | मे.सि.ध. | वृ.कं.म. | मि.तु.कुं. | क.वृ.मी. |
| मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | ३।२० | १ मं. | १० श. | ७ शु. | ४ चं. |
| वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | ६।४० | २ शु. | ११ श. | ८ मं. | ५ सू. |
| मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | १०।०० | ३ बु. | १२ बृ. | ९ बृ. | ६ बु. |
| कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | १३।२० | ४ चं. | १ मं. | १० श. | ७ शु. |
| सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | १६।४० | ५ सू. | २ शु. | ११ श. | ८ मं. |
| कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | २०।०० | ६ बु. | ३ बु. | १२ बृ. | ९ बृ. |
| तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | २३।२० | ७ शु. | ४ चं. | १ मं. | १० श. |
| वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | २६।४० | ८ मं. | ५ सू. | २ शु. | ११ श. |
| धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | ३०।०० | ९ बृ. | ६ बु. | ३ बु. | १२ बृ. |
| चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | - | - | - | - | - |



## सूर्यचन्द्र होरा

**समगृहमध्ये शशिरविहोरा  विषमभमध्ये रविशशिनोः सा ॥३८॥**

भावार्थः- जोर राशिमा १५ अंशसम्म पहिलो होरा चन्द्रमाको र १६ देखि ३० अंशसम्म दोश्रो होरा सूर्यको हुन्छ भने बिजोर राशिमा १५ अंशसम्म पहिलो होरा सूर्यको र १६ देखि ३० अंशसम्म दोश्रो होरा चन्द्रमाको हुन्छ ।

| राशि / अंश | वृष, कर्कट, कन्या, वृश्चिक, मकर र मीन | मेष, मिथुन, सिंह, तुला, धनु र कुम्भ |
|---|---|---|
| १-१५ | चन्द्रमाको होरा | सूर्यको होरा |
| १६-३० | सूर्यको होरा | चन्द्रमाको होरा |

## त्रिंशांश

**शुक्रज्ञजीवशनिभूतनयस्य बाण शैलाष्टपञ्चविशिखाः समराशिमध्ये ।**
**त्रिंशांशको विषमभे विपरीतमस्माद्.....।**

भावार्थः- जोर राशिमा शुरुदेखि क्रमशः ५ अंश शुक्रको, ७ अंश बुधको, ८ अंश बृहस्पतिको, ५ अंश शनिको र अन्तिम ५ अंश मङ्गलको त्रिंशांश हुन्छ । बिजोर राशिमा शुरुदेखि क्रमशः ५ अंश मङ्गलको, ५ अंश शनिको, ८ अंश बृहस्पतिको, ७ बुधको र अन्तिम ५ अंश शुक्रको त्रिंशांश हुन्छ ।

त्रिंशांश तालिका



| मेष, मिथुन, सिंह, तुला, धनु र कुम्भ | वृष, कर्कट, कन्या, वृश्चिक, मकर र मीन |
|---|---|
| ५ अंश मङ्गल (५ अंश मेष) १-५ | ५ अंश शुक्र (५ अंश वृष) १-५ |
| ५ अंश शनि (५ अंश कुम्भ) ६-१० | ७ अंश बुध (७ अंश कन्या) ६-१२ |
| ८ अंश बृहस्पति (८ अंश धनु) ११-१८ | ८ अंश बृहस्पति (८ अंश मीन) १३-२० |
| ७ अंश बुध (७ अंश मिथुन) १९-२५ | ५ अंश शनि (५ अंश मकर) २१-२५ |
| ५ अंश शुक्र (५ अंश तुला) २६-३० | ५ अंश मङ्गल (५ अंश वृश्चिक) २६-३० |

## द्रेष्काण

**....द्रेष्काणकाः प्रथमपञ्चनवाधिपानाम्॥३९॥**

भावार्थः- प्रत्येक राशिमा १०-१० अंशको १-१ द्रेष्काण मानिएको छ । एक राशिमा ३ द्रेष्काण हुन्छन् । जुन राशि (लग्न) को द्रेष्काण हेर्नु पर्ने हो पहिलो १० अंशसम्म त्यही राशिको, त्यसपछि २० अंशसम्म त्यसको पाँचौं राशिको दोश्रो द्रेष्काण र त्यसपछि ३० अंशसम्म त्यसको नवौं राशिको तेश्रो द्रेष्काण हुन्छ ।

द्रेष्काण बुझाउने तालिकाः

| राशि | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| प्र.१-१० अंश | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. |
| द्वि.११-२० अंश | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. |
| द्वि.२१-३० अंश | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. |

**द्वादशांश**



**स्याद् द्वादशांश इह राशित एव गेहं होराऽथ दृक्कनवमांशकसूर्यभागाः ।**
**त्रिंशांशकश्च षडिमे कथितास्तु वर्गाः सौम्यैः शुभं भवति चाशुभमेव पापैः ॥४०॥**

भावार्थः- एक राशि (३०) को १२ औं भाग (२।३०) लाई द्वादशांश मानिएको छ । प्रत्येक राशि (लग्न) बाट द्वादशांश गनिने गरिन्छ । जस्तैः मेषमा पहिलो मेषको, दोश्रो वृषको..., वृषमा पहिलो वृषको, दोश्रो मिथुनको...आदि) । यसै गरी राशि, होरा, द्रेष्काण, नवांश, द्वादशांश र त्रिंशांशलाई षड्वर्ग भनिएको छ । शुभग्रहको वर्ग शुभ र अशुभ ग्रहको वर्ग अशुभ फल दिने हुन्छ । त्यसैले शुभकार्य गर्दा शुभग्रहको वर्गको जोड धेरै भए उत्तम हुन्छ ।

## द्वादशांश बुझाउने तालिका

| राशि | मेष | वृष | मिथुन | कर्क६ | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| २।३० | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. |
| ५।० | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. |
| ७।३० | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. |
| १०।० | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. |
| १२।३० | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. |
| १५।० | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. |
| १७।३० | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. |
| २०।० | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. |
| २२।३० | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. |
| २५।० | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. |
| २७।३० | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. |
| ३०।० | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. |



## विवाहमा वरवधूको नक्षत्र जुराउने काम

**पौष्णेशशाक्राद्रससूर्यनन्दाः पूर्वार्द्धमध्याऽपरभागयुग्मम् ।**
**भर्ता प्रियः प्राग्युजिभे स्त्रियाः स्यान्मध्ये द्वयोः प्रेम परे प्रिया स्त्री ॥४१॥**

भावार्थः- रेवतीबाट ६ नक्षत्र प्रथम भाग, आर्द्राबाट १२ नक्षत्र मध्यभाग र ज्येष्ठाबाट ९ नक्षत्र उत्तरभागका हुन् । वर-वधू दुवैको नक्षत्र प्रथम भागमा परे स्त्री पतिप्रिय हुन्छे, मध्यभागमा परे वर-वधुको प्रेमसम्बन्ध सुमधुर हुन्छ र अन्तभागमा परे पत्नीलाई धेरै माया गर्ने हुन्छ । यसको उल्टो हुँदा दुबैमा प्रेम हुँदैन जसले गर्दा कुटुम्ब-कलह र दरिद्रता-वास हुन जान्छ ।

### स्वामी र सेवक आदिका नक्षत्र र फल

सेव्याधमर्णयुवतीनगरादिभं चेत् पूर्वं हि भृत्यधनिभर्तृ पुरादिसद्भात् ।
सेनाविनाशधननाशनभर्तृनाशग्रामादिसौख्यहृदिदं क्रमशः प्रदिष्टम् ॥४२॥

भावार्थः- मालिकको नक्षत्रबाट गन्दा सेवकको नक्षत्र दोश्रो भए सेवा नाश हुन्छ । ऋण लिनेको जन्मनक्षात्रबाट ऋण दिनेको जन्मनक्षात्र दोश्रो भए दिइएको धन फिर्ता हुँदैन । पत्नीको जन्मनक्षात्रबाट पतिको जन्मनक्षात्र दोश्रो भए पतिको नाश हुन्छ । गाउँको नक्षात्रबाट त्यहाँ बस्नेको जन्मनक्षात्र दोश्रो भए त्यस गाउँबाट उसलाई कहिल्यै सुख हुँदैन ।

### विवाहमा गण्डान्त जुराउने काम



ज्येष्ठापौष्णभसार्पभान्त्यघटिकायुग्मं च मूलाश्विनी-
पित्र्यादौ घटिकाद्वयं निगदितं तद्भस्य गण्डान्तकम् ।
कर्काल्यण्डजभान्ततोऽर्धघटिका सिंहाश्वमेषादिगा
पूर्णान्ते घटिकात्मकं त्वशुभदं नन्दातिथेश्चादिभम् ॥४३॥

भावार्थः- ज्येष्ठा, रेवती र अश्लेषाको अन्तिम २ तथा मूल, अश्विनी र मघाको शुरुको २ घडी नक्षात्र गण्डान्त हुन्छ । कर्क, वृश्चिक र मीन लग्नका अन्तिम आधा घडी र सिंह, धनु र मेष लग्नका शुरुका आधा घडीलाई लग्नगण्डान्त भनिन्छ । पूर्णा तिथिको अन्तिम १ घडी र नन्दा तिथिका शुरुका १ घडीलाई तिथिगण्डान्त भनिन्छ । तीनै गण्डान्तमा विवाह आदि शुभकार्य गर्न निषेध छ ।

विवाहमा कर्तरी लग्न

**लग्नात् पापावृज्वनृजू व्ययार्थस्थौ यदा तदा ।**
**कर्तरी नाम सा ज्ञेया मृत्युदारिद्र्यशोकदा ॥४४॥**

भावार्थः- विवाहलग्नबाट पापग्रह मार्गी भएर बाह्रौं र बक्री भएर दोश्रो स्थानमा भए कर्तरी नामको योग हुन्छ । यो योग मृत्यु, दरिद्रता र शोक दिने हुन्छ ।

विवाह लग्न र चन्द्रमाको स्थिति

**चन्द्रे सूर्यादिसंयुक्ते दारिद्र्यं मरणं शुभम् ।**
**सौख्यं सापत्न्यवैराग्ये पापद्वययुते मृतिः ॥४५॥**



भावार्थः- विवाहको समयमा चन्द्रमा यदि सूर्य आदि ग्रहले युक्त छ भने क्रमशः दरिद्रता, मरण, शुभ, सुख, सौताबाट कष्ट र वैराग्य फल दिने हुन्छ । यदि दुई वटा पापग्रहले युक्त भएको चन्द्रमा भए मृत्यु हुन्छ ।

**जन्मलग्नभयोर्मृत्युराशौ नेष्टः करग्रहः ।**
**एकाधिपत्ये राशीशे मैत्र्ये वा नैव दोषकृत् ॥४६॥**

भावार्थः- जन्मलग्न वा चन्द्रमाबाट आठौं राशिको लग्नमा गरिने विवाह वरकन्या दुवैका लागि अशुभ हुन्छ । तर, एकाधिपत्य वा विवाहलग्न र जन्मलग्नका मालिकका बिचमा मित्रता भए यो दोष हुँदैन ।

### लग्नको स्थिति र भविष्यवाणि

**मीनोऽक्षकर्कालिमृगस्त्रियोऽष्टमं लग्नं यदा नाष्टमगेहदोषकृत् ।**
**अन्योन्यमित्रत्ववशेन सा वधूर्भवेत् सुतायुर्गृहसौख्यभाग्नी ॥४७॥**

भावार्थः- वरवधूको जन्मराशि वा लग्नबाट आठौं लग्न यदि मीन-वृष-कर्कट-वृश्चिक-मकर-कन्या लग्न भए अष्टम स्थानको दोष हुँदैन किनकि यस्तो अवस्थामा आपसमा मित्रता अथवा एकाधिपत्य हुनाले ती वधू पुत्र-आयु-गृह र सुख भोग्ने हुन्छे ।

**मृतिभवनांशो यदि च विलग्ने तदधिपतिर्वा न शुभकरः स्यात् ।**
**व्ययभवनं वा भवति तदंशस्तदधिपतिर्वा कलहकरः स्यात् ॥४८॥**



भावार्थः- वरवधूको जन्मसमयमा आठौँ राशिको नवमांश वा आठौँ राशिको स्वामी विवाह लग्नमा परे अशुभ हुन्छ । बाह्रौँ राशिको नवमांश वा बाह्रौँ राशिको स्वामी विवाह लग्नमा परे वरवधूका बीचमा सधैँ झगडा हुने गर्दछ ।

### विषघडी

**खरामतोऽन्त्यादितिवह्निपित्र्यभे खवेदतः के रदतश्च सार्पभे ।**
**खबाणतोऽश्वे धृतितोऽर्यमाम्बुपे कृतेर्भगत्वाष्ट्रभविश्वजीवभे ॥४९॥**
**मनोर्द्विदैवानिलसौम्यशाक्रभे कुपक्षतः शैवकरेऽष्टितोऽजभे ।**
**युगाश्वितो बुध्न्यभतोययाम्यभे खचन्द्रतो मित्रभवासवश्रुतौ ॥५०॥**
**मूलेऽङ्गबाणाद् विषनाडिकाः कृता वर्ज्याः शुभेऽथो विषनाडिका ध्रुवाः ।**
**निघ्ना भभोगेन खतर्कभाजिताः स्फुटा भवेयुर्विषनाडिकास्तथा ॥५१॥**

भावार्थः- रेवती, पुनर्वसु, कृत्तिका र मघा : यी ४ नक्षत्रमा ३० घडी पछाडी, रोहिणी नक्षत्रमा ४० घडी पछाडी, अश्लेषा नक्षत्रमा ३२ घडी पछाडी, अश्विनी नक्षत्रमा ५० घडी पछाडी, उत्तराफाल्गुनी र शतभिषा नक्षत्रमा १८ घडी पछाडी, पूर्वाफाल्गुनी-चित्रा- उत्तराषाढा र पुष्य नक्षत्रमा २० घडी पछाडी, विशाखा-स्वाती- मृगशिरा र ज्येष्ठा नक्षत्रमा १४ घडी पछाडी, आर्द्रा र हस्ता नक्षत्रमा २१ घडी पछाडी, पूर्वभाद्रपदा नक्षत्रमा १६ घडी पछाडी, उत्तरभाद्रपदा-पूर्वाषाढा र भरणी नक्षत्रमा २४ घडी पछाडी, अनुराधा-धनिष्ठा र श्रवण नक्षत्रमा १० घडी पछाडी तथा मूल नक्षत्रमा ५६ घडी पछाडीका ४-४ घडी विषघडी हुन्छन्, जुन सबै खाले शुभकार्यमा वर्जित हुन्छन् । यो विषनाडी ध्रुवालाई भभोगले गुणन गरी ६० ले भाग गर्दा स्पष्ट ध्रुवघडी तथा विषघडी हुन्छ ।



दिनका मुहूर्त र तिनका स्वामी

**गिरिशभुजगमित्राः पित्र्यवस्वम्बुविश्वे-**
**ऽभिजिदथ च विधाताऽपीन्द्र इन्द्रानलौ च ।**
**निर्ऋतिरुदकनाथोऽप्यर्यमाऽथो भगः स्युः**
**क्रमश इह मुहूर्त्ता वासरे बाणचन्द्राः ॥५२॥**

भावार्थः- दिनका पहिलोदेखि पन्ध्रौं मुहूर्त्तसम्मका स्वामी क्रमशः आर्द्रा, अश्लेषा, अनुराधा, मघा, धनिष्ठा, पूर्वाषाढा, उत्तराषाढा, अभिजित्, रोहिणी, ज्येष्ठा, विशाखा, मूल, शतभिषा, उत्तराफाल्गुनी र पूर्वाफाल्गुनी हुन्छन् ।

## रातका मुहूर्त्त र स्वामी

**शिवोऽजपादादष्टौ स्युर्भेशा अदितिजीवकौ ।**
**विष्ण्वर्कत्वष्टृमरुतो मुहूर्त्ता निशि कीर्त्तिताः ॥५३॥**

भावार्थः- रातका पहिलोदेखि पन्ध्रौं मुहूर्त्तसम्मका स्वामी क्रमशः आर्द्रा, पूर्वभाद्रपदा, उत्तरभाद्रपदा, रेवती, अश्विनी, भरणी, कृत्तिका, रोहिणी, मृगशिरा, पुनर्वसु, पुष्य, श्रवण, हस्ता, चित्रा र स्वाती हुन्छन् ।

## निषिद्ध मुहूर्त

**रवावर्यमा ब्रह्मरक्षश्च सोमे कुजे वह्निपित्र्ये बुधे चाभिजित् स्यात् ।**
**गुरौ तोयरक्षो भृगौ ब्राह्मपित्र्ये शनावीशसार्पौ मुहूर्ता निषिद्धाः ॥५४॥**

भावार्थः- आइतबार चौधौं अर्यमा, सोमबार नवौं ब्रह्म र बाह्रौं निर्ऋति, मङ्गलबार सातौं वह्नि र चौथो पित्र्य, बुधबार आठौं अभिजित्, बिहीबार छैटौं जल र बाह्रौं रक्ष, शुक्रबार नवौं ब्रह्म र चौथो पित्र्य तथा शनिबार पहिलो ईश र दोश्रो सर्प मुहूर्त निषिद्ध भनिएको छ । यिनमा शुभकार्य नगर्नू ।

**बार अनुसार त्याग गर्नुपर्ने मुहूर्तहरु**

| बार | आइत | सोम | मङ्गल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| दिनमा डाड्नुपर्ने मुहूर्त | १४ | ९ र १२ | ४ र ७ | ८ | ६ र १२ | ४ र ९ | १ र २ |
| रातमा छाड्नुपर्ने मुहूर्त | - | ८ | ७ | - | - | ८ | १ |

विवाहआदि गर्न हुने नक्षत्र

निर्वेधैः शशिकरमूलमैत्र्यपित्र्य-
ब्राह्मान्त्योत्तरपवनैः शुभो विवाहः ।
रिक्ताऽमारहिततिथौ शुभेऽह्नि वैश्व-
प्रान्त्याङ्घ्रिश्रुतितिथिभागतोऽभिजित्स्यात् ॥५५॥

भावार्थः- पञ्चशलाका चक्रमा सूर्यादि ग्रहबाट वेध नभएको मृगशिरा, हस्ता, मूल, अनुराधा, मघा, रोहिणी, रेवती, तीनै उत्तरा र स्वाती गरी ११ नक्षत्रमा, रिक्ता र औंसी तिथि बाहेकका तिथिमा शुभग्रहका बारमा (बु.गु.शु.सो.) विवाह गर्नु उत्तम हुन्छ । उत्तराषाढाको चौथो चरण र श्रवणको ४ घडी (मध्यमानबाट) अभिजित् नक्षत्रको भोगकाल हुन्छ ।



पञ्चशलाका वेध

वेधोऽन्योन्यमसौ विरिञ्च्यभिजितोर्याम्यानुराधर्क्षयो-
र्विश्वेन्द्वोर्हरिपित्र्ययोर्ग्रहकृतो हस्तोत्तराभाद्रयोः ।
स्वातीवारुणयोर्भवेन्निर्ऋतिभादित्योस्तथोपान्त्ययोः
खेटे तत्र गते तुरीयचरणाद्योर्वा तृतीयद्वयोः ॥५६॥

भावार्थः- रोहिणी-अभिजित्, भरणी-अनुराधा, उत्तराषाढा-मृगशिरा, श्रवण-मघा, हस्ता-उत्तरभाद्रपदा, स्वाती-शतभिषा, मूल-पुनर्वसु तथा उत्तराफाल्गुनी-रेवती यि जोडी नक्षत्रमा परस्पर वेध हुन्छ अर्थात दुईमध्ये एउटामा कुनै ग्रह भए दोश्रो नक्षत्रलाई विद्ध भनिन्छ । यसरी एकआपसमा विद्ध नक्षत्रमा

एउटाको चौथो चरणबाट अर्कोको पहिलो चरणबाट तथा तेश्रो र चौथो चरणबाट वेध हुन्छ । विद्ध नक्षत्रमा विवाह गर्नु हुँदैन ।

पञ्चशलाका नक्षत्र वेधवोधक -चक्र






सप्तशलाका वेध

शाक्रेज्ये शतभानिले जलशिवे पौष्णार्यमर्क्षे वसु-
द्वीशे वैश्वसुधांशुभे हयभगे सार्पानुराधे तथा ।
हस्तोपान्तिभमे विधातृविधिभे मूलादिती त्वाष्ट्रभे-
ऽजाङ्घ्री याम्यमघे कृशानुहरिभे विद्धेऽद्रिरेखे मिथः ।।५७।।

भावार्थः- ज्येष्ठा-पुष्य, शतभिषा-स्वाती, पूर्वाषाढा-आर्द्रा, रेवती-उत्तराफाल्गुनी, धनिष्ठा-विशाखा, उत्तराषाढा-मृगशिरा, अश्विनी-पूर्वाफाल्गुनी, अश्लेषा-अनुराधा, हस्ता-उत्तर भाद्र पदा, रोहिणी-अभिजित्, मूल-पुनर्वसु, चित्रा-पूर्वभाद्रपदा, भरणी-मघा र कृत्तिका-श्रवण : यी २-२ नक्षत्रमा परस्पर

वेध हुन्छ । यहाँ पनि ४।१३।२ चरणमा वेध हुन्छ । (आचार्यको मतमा शुभग्रहको वेधमा चरण, पापग्रहको वेधमा सम्पूर्ण नक्षत्र त्याग्नु पर्दछ) ।

**सप्तशलाका नक्षत्र वेधवोधक -चक्र**




**पञ्च वा सप्तशलाका वेधमा थप त्याज्य नक्षत्र**

**ऋक्षाणि क्रूरविद्धानि क्रूरमुक्तादिकानि च ।**
**भुक्त्वा चन्द्रेण मुक्तानि शुभार्हाणि प्रचक्षते ॥५८॥**

भावार्थः- पञ्चशलाका वा सप्तशलाका चक्रमा जुन नक्षत्र पापग्रहले विद्ध छ वा पापग्रहबाट मुक्त छ वा पहिलो पाउले पापभोग्य वा पापभुक्त छ वा त्रिविधोत्पातबाट दूषित छ त्यो नक्षत्र चन्द्रमाबाट भोगिएर छाडिएको छ भने शुभकर्ममा त्यस्तो नक्षत्र त्याज्य हुन्छ ।

## लत्ता दोष

**ज्ञराहुपूर्णेन्दुसिताः स्वपृष्ठे भं सप्तगोजातिशरैर्मितं हि ।**
**संलत्तयन्तेऽर्कशनीज्यभौमाः सूर्याष्टतर्काग्निमितं पुरस्तात् ॥५९॥**

भावार्थः- बुध, राहु, पूर्णचन्द्रमा र शुक्र जुन नक्षत्रमा रहन्छन् त्यस पछाडीका क्रमैले ७, ९, २२ र ५ औं नक्षत्रलाई लात हान्दछन् । यसरी नै सूर्य, शनि, बृहस्पति र मङ्गल आफूभन्दा अगाडिको क्रमशः १२, ८, ६ र तेश्रो नक्षत्रलाई लात हान्दछन् । कुनै पनि ग्रहले लात हानिएको नक्षत्र शुभ फलदिने हुँदैन ।

## पात दोष

**हर्षणवैधृतिसाध्यव्यतिपातकगण्डशूलयोगानाम् ।**
**अन्ते यन्नक्षत्रं पातेन निपातितं तत् स्यात् ॥६०॥**

भावार्थः- हर्षण, वैधृति, साध्य, व्यतिपात, गण्ड र शूल : यी ६ योगको अन्तमा जुन नक्षत्र हुन्छ, त्यो पात नामक दोषले दूषित हुने बताइन्छ । यो दोष पनि विवाहमा त्याज्य हुन्छ ।

## क्रान्तिसाम्य दोष

**पञ्चास्याजौ गोमृगौ तौलिकुम्भौ कन्यामीनौ कर्क्यली चापयुग्मे ।**
**तत्रान्योन्यं चान्द्रभान्वोर्निरुक्तं क्रान्तेः साम्यं नो शुभं मङ्गलेषु ॥६१॥**

भावार्थः- सिंह-मेष, वृष-मकर, तुला-कुम्भ, कन्या-मीन, कर्क-वृश्चिक तथा धनु-मिथुन : यी दुई-दुई राशिमा एकअर्कोमा सूर्य र चन्द्रमा रहँदा क्रान्तिसाम्य नामक दोष हुन जान्छ । यो दोष विवाहलग्नमा भए अनिष्टकारक हुन्छ ।

मेष मीन कुम्भ
वृष मकर
मिथुन धनु
कर्कट वृश्चिक
सिंह कन्या तुला

**खर्जूर र एकार्गल दोष**



**व्याघातगण्डव्यतिपातपूर्वे शूलान्त्यवज्रे परिघातिगण्डे ।**
**एकार्गलाख्यो ह्यभिजित्समेतो दोषः शशी चेद्विषमर्क्षगोऽर्कात् ॥६२॥**

भावार्थः- व्याघात, गण्ड, व्यतिपात, विष्कम्भ, शूल, वैधृति, वज्र, परिघ तथा अतिगण्ड : यी योगहरूमध्ये कुनै योग छ र त्यसैबेला सूर्यरहेको नक्षात्रबाट गन्दा बिजोर संख्याको नक्षत्रमा चन्द्रमा पनि छ भने त्यो खर्जूर नामक दोष हुन्छ । यो दोष विवाहमा निन्दित छ । यसैलाई एकार्गल पनि भन्दछन् । यसमा अभिजित समेत गणना गरिन्छ ।

### सूर्य र चन्द्रको योग

**शराष्टदिक्शक्रनगातिधृत्यस्तिथिधृतिश्च प्रकृतेश्च पञ्च ।**
**उपग्रहाः सूर्यभतोऽब्जताराः शुभा न देशे कुरुबाह्लिकानाम् ॥६३॥**

भावार्थः- जुन नक्षत्रमा सूर्य हुन्छ त्यसबाट ५।८।१०।१४।७।१९।१५।१८।२१।२२।२३।२४ र २५ औं नक्षत्रमा चन्द्रमा भए उपग्रह नामको दोष हुन्छ । यो दोष हुँदा कुरु र बाह्लीक देशमा शुभकार्य गर्न निषेध मानिएको छ ।

### विवाह गर्न नहुने याम

**पातोपग्रहलत्तासु नेष्टोऽङ्घ्रिः खेटपत्समः ।**
**वारस्त्रिघ्नोऽष्टभिस्तष्टः सैकः स्यादर्धयामकः ॥६४॥**

भावार्थः- पात, उपग्रह तथा लत्ता दोषमा दोषकारी ग्रहनक्षत्र रहेको चरण अशुभ हुन्छ । दिनमानको आठौं भागलाई अर्द्धयाम भनिन्छ । प्रत्येक दिनको १ अर्द्धयाम अशुभ हुन्छ । त्यो निकाल्ने तरिका यो छ कि बार संख्यालाई ३ ले गुणन गर्नू आएको गुणनफललाई ८ ले भाग गर्नू, जति शेष रहन्छ त्यसमा १ जोड्नू त्यो अशुभ अर्द्धयाम हुन्छ । अर्द्धयाम पनि विवाहमा निषिद्ध हो ।

### कुलिक मुहूर्त

**शक्रार्कदिग्वसुरसाब्ध्यश्विनः कुलका रवेः ।**
**रात्रौ निरेकास्तिथ्यंशाः शनौ चान्तोऽपि निन्दितः ॥६५॥**

भावार्थः- आइत आदि बारमा क्रमैले १४।१२।१०।८।६।४।२ मुहूर्त कुलिक मुहूर्त हुन्छ । (दिनमानको ५ औं भागलाई मुहूर्त भनिएको छ ।) रातमा यसमा १ घटाएर आउने मुहूर्तलाई कुलिक मुहूर्त हुन्छ । शनिबारको अन्तिम मुहूर्त अर्थात १५ औं मुहूर्त पनि निन्दनीय हुन्छ ।

कुलिक आदि मुहूर्त तालिका

| वार, मुहूर्त | आईत | सोम | मङ्गल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| कुलिक | १४ | १२ | १० | ८ | ६ | ४ | २ |
| कालवेला | ८ | ६ | ४ | २ | १४ | १२ | १० |
| यमघण्ट | १० | ८ | ६ | ४ | २ | १४ | १२ |
| कण्टक | ६ | ४ | २ | १४ | १२ | १० | ८ |

अर्द्धयाम, दिवाकुलिक र रात्रिकुलिक मुहूर्त तालिका



| वार | आइत | सोम | मङ्गल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| अर्धयाम | ४ | ७ | २ | ५ | ८ | ३ | ६ |
| दिवाकुलिक | १४ | १२ | १० | ८ | ६ | ४ | २ |
| रात्रिकुलिक | १३ | ११ | ९ | ७ | ५ | ३ | १, १५ |

**विवाह गर्न नहुने तिथि**

**चापान्त्यगे गोघटके पतङ्गे कर्काजगे स्त्रीमिथुने स्थिते वा ।**
**सिंहालिगे नक्रघटे समाः स्युस्तिथ्यो द्वितीयाप्रमुखाश्च दग्धाः ॥६६॥**

भावार्थः- सूर्य धनु-मीनमा भए द्वितीया, वृष-कुम्भमा भए चतुर्थी, कर्कट-मेषमा भए षष्ठी, कन्या-मिथुनमा भए अष्टमी, सिंह-वृश्चिकमा भए दशमी तथा मकर-कुम्भमा

भए द्वादशी तिथि- यस्तो परे त्यो दग्धतिथि हुन्छ । यो पनि विवाहमा निषिद्ध छ ।

| सूर्य रहेको राशि | धनु-मीन | वृष-कुम्भ | कर्कट-मेष | कन्या-मिथुन | सिंह-वृश्चिक | मकर-कुम्भ |
|---|---|---|---|---|---|---|
| दग्धतिथि | द्वितीया | चतुर्थी | षष्ठी | अष्टमी | दशमी | द्वादशी |

### जामित्र दोष

**लग्नाच्चन्द्रान्मदनभवनगे खेटे न स्यादिह परिणयनम् ।**
**किं वा बाणाशुगमितलवगे जामित्रं स्यादशुभकरमिदम् ॥६७॥**

भावार्थः- विवाहलग्न वा विवाहकालीन चन्द्रमाबाट सातौं स्थानमा कुनै ग्रह पर्न गए जामित्र दोष हुन्छ । यो दोष विवाहमा अति अशुभ हुन्छ । विवाहलग्नमा चन्द्रमा जुन नवांशमा छन् त्यसबाट ५५ औं नवांशमा (जस्तैः-मेषको दोश्रो नवांशमा चन्द्रमा भए तुलाको दोश्रो नवांशमा) कुनै ग्रह भए सूक्ष्म जामित्र दोष हुन्छ । जामित्र दोषमा विवाह गर्न नहुने मानिएको छ ।

### सूर्य र चन्द्रको योग

**एकार्गलोपग्रहपातलत्ताजामित्रकर्त्तर्युदयास्तदोषाः ।**
**नश्यन्ति चन्द्रार्कबलोपपन्ने लग्ने यथार्काभ्युदये तु दोषाः ॥६८॥**

भावार्थः- विवाहकालमा यदि सूर्यचन्द्र दुवै बलिया छन् (आफ्नो उच्च राशिमा, आफ्नो मित्रको उच्च राशिमा, आफ्नो मूल त्रिकोणमा, आफ्नो नवांशमा, मित्रले दृष्टि दिएको अवस्थामा वा वर्गोत्तममा भएमा) एकार्गल, उपग्रह, पात, लत्ता,

जामित्र, कर्तरी, उदयास्त आदि सबै दोष सूर्योदयले रात नष्ट भएजसरी नै नष्ट हुन्छन् ।

### स्थान अनुसार दोष

**उपग्रहर्क्षं कुरुवाह्लिकेषु कलिङ्गबङ्गेषु च पातितं भम् ।**
**सौराष्ट्रशाल्वेषु च लत्तितं भं त्यजेत्तु विद्धं किल सर्वदेशे ॥६९॥**

भावार्थः- उपग्रहदोष कुरुक्षेत्र र कश्मिरमा, पातदोष उडिसा र मद्रासको बीचभागमा, लत्ता दोष सूरत र हिमालयका छेउछाउमा तथा वेधदोष सबै देशमा बार्नु पर्दछ । यी दोषका सम्बन्धमा देशाचार र कुलाचार पनि हेर्नु पर्दछ ।

### नक्षत्र वेध निकाल्ने अर्को तरिका

**शशाङ्कसूर्यर्क्षयुतेर्भशेषे खं भूयुगाङ्गानि दशेशतिथ्यः ।**
**नागेन्दवोऽङ्केन्दुमिता नखाश्चेद्भवन्ति चैते दशयोगसंज्ञाः ॥७०॥**
**वाताभ्राष्टिमहीपचोरमरणं रुग्वज्रवादाः क्षति-**
**र्योगाङ्के दलिते समे मनुयुतेऽथौजे तु सैकेऽर्धिते ।**
**भं दास्रादथ सम्मितास्तु मनुभीः रेखाः क्रमात् संलिखे-**
**द्वेधोऽस्मिन् ग्रहचन्द्रयोर्न शुभदः स्यादेकरेखास्थयोः ॥७१॥**

भावार्थः- विवाहका बेलामा चन्द्रसूर्य जुन नक्षत्रमा रहेका छन् त्यसको सङ्ख्याको जोडलाई २७ ले भागगर्दा ०।१।४।६।१०।११।१५।१८। १९।२० शेष रहन गए ती क्रमैले भय, वायु, मेघ, अग्नि, महीप, चोर, मरण, रोग, बज्र, वाद र क्षति नामका योग हुन्छन् र नाम अनुसार नै फल दिन्छन् । चन्द्रसूर्य रहेका

नक्षत्रको जोड जोर अङ्क भए आधा गर्नू, बिजोर आए १ जोडेर आधा गर्नू । त्यसपछि १४ वटा तेर्सा धर्का कोर्नू । अब ती नक्षत्रलाई ती रेखाका दुईतिर अभिजित सहित लेख्नू । ग्रह र चन्द्रमा एउटै रेखामा परे वेध हुन्छ । यस्तो वेध विवाहमा छोड्नु पर्दछ ।

| शेष अङ्क | ० | १ | ४ | ६ | १० | ११ | १५ | १८ | १९ | २० |
|---|---|---|---|---|---|---|---|---|---|---|
| भयको कारण | वायु | मेघ | अग्नि | महीप | चोर | मरण | रोग | वज्र | वाद | क्षति |

उदाहरणः - मंसिरको कुनै दिन सूर्य ज्येष्ठामा (१८) र चन्द्रमा हस्तामा (१३) छन् । दुवैको जोड ३१ लाई २७ ले भागगर्दा शेष ४ हुन्छ । त्यसैले अग्निभय दोष हुन्छ । यसैले हस्ता नक्षत्रमा मंसिरमा विवाह गर्नु अशुभ हुन्छ ।

| भ. | अ. |
|---|---|
| कृ. | रे./केतु |
| रो. | उ.भा. |
| मृ. | पू.भा. |
| आ./बृहस्पति | शत. |
| मुन. | धनि. |
| पु./मङ्गल | श्र. |
| अश्ले. | अभि. |
| म./शनि | उ.षा. |
| पू.फा. | पू.षा. |
| उ.फा. | मू./बुध |
| ह./राहु/चन्द्र | ज्ये./सूर्य |
| चि. | अनु./शुक्र |
| स्वा. | वि. |

माथि बताइएका दुई नक्षत्रको योग ३१ बिजोर छ, त्यसैले यसमा १ जोडी ३२ बनाई आधा गर्दा १६ भयो । १६ मा १४ जोड्दा ३० हुन्छ । यसलाई २८ ले भागगर्दा २ शेष रहन्छ । दुई शेष भनेको दोश्रो अर्थात भरणी नक्षत्र भयो । अब भरणी बाट अभिजित समेतका २८ नक्षत्र ठाडो गरी एकापट्टि १४ वटा माथिबाट तलसम्म र अर्कोपट्टि १४ नक्षत्र तलबाट माथिसम्म सँगैको तालिका अनुसार क्रमशः राख्ने । जुन ग्रह जुन नक्षत्रमा छन् त्यसको हरफमा राख्ने । यो उदाहरणमा चन्द्रमा रहेको नक्षत्र सूर्यसँग विद्ध एउटै लाइनमा परी विद्ध भएको हुनाले अशुभदायक भयो ।



### विवाह गर्न नहुने तिथि

**लग्नेनाढ्या याततिथ्योऽङ्कतष्टाः शेषे नागद्व्यब्धितर्केन्दुसङ्ख्ये ।**
**रोगो बह्नी राजचौरो च मृत्युर्बाणश्चापं दाक्षिणात्यप्रसिद्धः ॥७२॥**

भावार्थः- शुक्लपक्षको परेवादेखि जतिवटा तिथि बिते त्यो सङ्ख्यामा विवाह लग्नलाई जोडेर ९ ले भागगर्दा ८ शेष रहे रोग, २ शेष रहे अग्नि, ४ शेष रहे राज, ६ रहे

चोर तथा १ रहे मृत्यु बाण हुन्छ । यो महाराष्ट्रमा प्रसिद्ध छ । अन्यत्र यो हेर्नु पर्दैन ।

### सशल्य बाण जुराउने कार्य

**रसगुणशशिनागाब्ध्याढ्यसङ्क्रान्तियातांशकमितिरथ तष्टाऽपङ्क्तैर्यदा पञ्च शेषाः ।**
**रुगनलनृपचौरा मृत्युसञ्ज्ञश्च बाणो नवहृतशरशेषे शेषकैक्ये सशल्यः ॥७३॥**

भावार्थः- सूर्यको स्पष्ट सङ्क्रान्तिको बितेका अंश (गत सूर्यांश) लाई ५ ठाउँमा अलगअलग राखी वक्रमैले ६।३।१।८।४ जोड्नू र ९ ले भाग गर्नू । ५ शेष रहन गए क्रमैले रोग, अग्नि, नृप, चौर र मृत्यु बाण हुन्छ । ५ वटा शेषको जोडलाई ९ ले भाग गरी ५ शेष रहे सशल्य बाण हुन्छ ।

उदाहरणः- सूर्यको गतांश २२ अंश छ ।



| | | | | | |
|---|---|---|---|---|---|
| गत सूर्यांश | २२ | २२ | २२ | २२ | २२ |
| जोडिने अङ्क | ६ | ३ | १ | ८ | ४ |
| जोडफल | २८ | २५ | २३ | ३० | २६ |
| जोडफललाई भाग गर्ने अङ्क | ९ | ९ | ९ | ९ | ९ |
| शेष | १ | ७ | ५ | ३ | ८ |
| ५ शेष रहेमा हुने बाणको नाम | रोग | अग्नि | नृप | चौर | मृत्यु |
| शेषको जोड | २४ | | | | |
| भाग गर्ने अङ्क | ९ | | | | |
| ९ लाई २४ ले भागगर्दा आउने शेष | ६ (५ शेष नरहेकोले सशल्य बाण भएन) | | | | |

### सशल्य बाणको बारना (बाणदोषको बारना)

**रात्रौ चौररुजौ दिवा नरपतिर्वह्निः सदा सन्ध्ययो-**
**र्मृत्युश्चाथ शनौ नृपो विदि मृतिर्भौमेऽग्निचौरौ रवौ ।**
**रोगोऽथ व्रतगेहगोपनृपसेवायानपाणिग्रहे**
**वर्ज्याश्च क्रमतो बुधै रुगनलक्ष्मापालचौरा मृतिः ॥७४॥**

भावार्थः- रातमा चौर र रोग, दिनमा राज, सर्वदा अग्नि र दुवै सन्ध्यामा मृत्युबाण शुभ हुन्न । शनिबार राज, बुधबार मृत्यु, मङ्गलबार अग्नि र चौर तथा आइतबार रोगबाण भए कुनै कार्य नगर्नू । उपनयनमा रोग, गृहाच्छादनमा अग्नि, नृपसेवामा राज, यात्रामा चौर र विवाहमा मृत्युबाण छाड्नू ।

| बाणको नाम | रोग | अग्नि | नृप | चोर | मृत्यु |
|---|---|---|---|---|---|
| सूर्यगतांश | ८, १७, २६ | २, ११, २०, २९ | ४, १३, २२ | ६, १५, २४ | १, १०, १९, २८ |
| बार्नुपर्ने समय | रात | सर्वदा | दिन | रात | दुबै सन्ध्या |
| बार्नुपर्ने बार | आइत | मङ्गल | शनि | मङ्गल | बुध |
| गर्न नहुने कार्य | उपनयन | गृहाच्छादन | राजसेवा | यात्रा | विवाह |

**ग्रहको दृष्टि**



**त्र्याशं त्रिकोणं चतुरस्रमस्तं पश्यन्ति खेटाश्चरणाभिवृद्ध्या ।**
**मन्दो गुरुर्भूमिसुतः परे च क्रमेण सम्पूर्णदृशो भवन्ति ॥७५॥**

भावार्थः- सबै ग्रह जुन राशिमा छन् त्यसबाट तेश्रो र दशौं स्थानलाई १ चरण, नवौं र पाँचौं स्थानलाई २ चरण, आठौं र चौथो स्थानलाई ३ चरण तथा सातौं स्थानलाई पुरै चरण हेर्दछ । शनिले ३।१०, बृहस्पतिले ९।५, मङ्गलले ४।८ स्थानलाई र सबै ग्रहले सातौं स्थानलाई पूरा देख्दछन् ।

**नवांश जुराउने काम (लग्नस्थानको शुद्धि)**

**यदा लग्नांशेशो लवमथ तनुं पश्यति युतो**
**भवेद्वायं वोढुः शुभफलमनल्पं रचयति ।**

**लवद्यूनस्वामी लवमदनभं लग्नमदनं**
**प्रपश्येद्वा वध्वाः शुभमितरथा ज्ञेयमशुभम् ॥७६॥**[१]

भावार्थः- विवाहलग्नमा जुन नवांश छ त्यसको स्वामी नवांशलाई देख्दछ वा युत छ अथवा लग्नलाई देख्दछ वा लग्नमा बसेको छ भने वरका लागि थोरै शुभफल दिन्छ । विवाह लग्नमा जुन नवांश छ त्यसबाट सातौं राशिको स्वामी, सातौं नवांशलाई देख्दछ वा नवांशले युक्त छ वा विवाहलग्न-गत नवांशबाट सातौं नवांशको स्वामी लग्नबाट सातौंलाई देख्दछ भने कन्यालाई शुभफदायक हुन्छ । यसको उल्टोमा वरवधूलाई अशुभ हुन्छ ।

१. उदाहरणः मार्गकृष्ण नवमी सोमबार चन्द्रमा तुला लग्नमा र धनुको नवांशमा विवाहलग्न हेर्नु छ । यहाँ विवाहलग्नमा धनुको नवांश छ । धनुको स्वामी बृहस्पति हो । बृहस्पति मिथुन राशिमा बसी धनु (नवांश) लाई देख्दछ । मिथुनस्थ बृहस्पति तुलालाई पनि देख्दछ । त्यसैले वरका लागि धेरै उत्तम फलदायक हुन्छ । नवांश (धनु) बाट सातौं राशि मिथुन हुन्छ । मिथुनको स्वामी बुध बृश्चिकमा बसी अष्टम दृष्टिबाट नवांश धनुबाट सप्तम (मिथुन)लाई हेरिरहेको छ । त्यसैले कन्याका लागि पनि अति शुभ हुन्छ ।



**लग्नबाट सातौं भावको शुद्धि**

**लवेशो लवं लग्नपो लग्नगेहं पैपश्येन्मिथो वा शुभं स्याद्वरस्य ।**
**लवद्यूनपोंऽशद्युनं लग्नपोऽस्तं मिथो वीक्षते स्याच्छुभं कन्यकायाः ॥७७॥**

भावार्थः- विवाहलग्नमा रहेको नवांशको स्वामीले नवांश राशिलाई तथा लग्नका स्वामीले लग्नलाई देख्दछ अथवा दुवै (लग्नेश र नवांशेश) आपसमा एकअर्कालाई

देख्दछन् भने वरका लागि उत्तम हुन्छ । नवांशका सप्तमेश नवांशबाट सप्तमलाई र लग्नको सप्तमेश लग्नबाट सप्तमलाई देख्दछ वा एकआपसमा नवांशको सप्तमेश लग्नबाट सप्तम राशिलाई तथा लग्नबाट सप्तम राशिको स्वामी नवांशको सप्तम राशिलाई देख्दछ भने कन्याका लागि त्यो धेरै उत्तम हुन्छ ।

### प्रकारान्तरले लग्न र सातौं भावको शुद्धि

**लवपतिशुभमित्रं वीक्षतेंऽशं तनुं वा परिणयनकरस्य स्याच्छुभं शास्त्रदृष्टम् ।**
**मदनलवपमित्रं सौम्यमंशद्युनं वा तनुमदनगृहं चेद्वीक्षते शर्म वध्वाः ॥७८॥**

भावार्थः- लग्नमा जुन नवांश छ, त्यो नवांशको स्वामीको मित्र कुनै शुभ ग्रह छ र त्यो शुभ ग्रहले नवांश राशिलाई वा लग्नलाई देख्दछ भने वरलाई शास्त्रमा भनिएको उत्तम फल दिन्छ । यस्तै, सातौं नवांशका स्वामीका शुभग्रह मित्र छन् तथा सातौं नवांश वा सातौं लग्नलाई देख्दछ भने त्यस अवस्थामा कन्यालाई उत्तम फल प्राप्त हुन्छ ।

### सूर्य सङ्क्रान्तिमा बार्ने समय

**विषुवायनेषु परपूर्वमध्यमान् दिवसांस्त्यजेदितरसङ्क्रमेषु हि ।**
**घटिकास्तु षोडश शुभक्रियाविधौ परतोऽपि पूर्वमपि सन्त्यजेद् बुधः ॥७९॥**

भावार्थः- मेष र तुला सङ्क्रान्ति तथा मकर र कर्कट सङ्क्रान्तिमा अघिल्लो र पछिल्लो दिन समेत गरी तीनै दिन शुभकार्यमा त्याग गर्नू । अरु ८ सङ्क्रान्तिमा सङ्क्रान्तिकालबाट अघिपछिका १६-१६ घडी विद्वानले त्याग गर्नू ।

**देवद्व्यङ्कर्तवोऽष्टाष्टौ नाड्योङ्का खनृपाः क्रमात् ।**
**वर्ज्याःसङ्क्रमणेऽर्कादिःप्रायोऽर्कस्यातिनिन्दिताः ॥८०॥**

भावार्थः- सूर्यको सङ्क्रान्तिमा ३३, चन्द्रकोमा २, मङ्गलकोमा ९, बुधकोमा ६, बृहस्पतिकोमा ८८, शुक्रकोमा ९ र शनिको सङ्क्रान्तिमा १६० घडी त्याग्नू । सूर्य सङ्क्रान्तिको घडी अती निन्दनीय हुन्छ ।

पङ्गु अन्ध आदि लग्नदोष

**घस्रे तुलाली बधिरौ मृगाश्वौ रात्रौ च सिंहाजवृषा दिवान्धाः ।**
**कन्यानृयुक्कर्कटका निशान्धा दिने घघोऽन्त्यो निशि पङ्गुसञ्ज्ञः ॥८१॥**



भावार्थः- दिनमा तुला र वृश्चिक तथा रातमा मकर र धनु लग्न बहिरा हुन्छन् । सिंह, मेष र वृष लग्न दिनमा अन्धा हुन्छन् भने कन्या, मिथुन र कर्कट लग्न रातमा अन्धा हुन्छन् । दिनको कुम्भ लग्न र रातको मीन लग्नलाई पङ्गु लग्न भनिन्छ ।

पङ्गु आदि दोषमा फरक मत

**बधिरा धन्वितुलालयोऽपराह्णे मिथुनं कर्कटकोऽङ्गना निशान्धाः ।**
**दिवसान्धा हरिगोक्रियास्तु कुब्जा मृगकुम्भान्तिमभानि सन्ध्ययोर्हि ॥८२॥**

भावार्थः- धनु, तुला र वृश्चिक लग्न अपराह्णमा बहिरा हुन्छन् । मिथुन, कर्कट र कन्या लग्न रातमा अन्धा हुन्छन् । सिंह, वृष र मेष लग्न दिनमा अन्धा हुन्छन् । मकर, कुम्भ र मीन लग्न दुवै सन्ध्यामा कुब्जो हुन्छन् ।

**पङ्गु आदि लग्नको फल**

**दारिद्र्यं बधिरतनौ दिवान्धलग्ने वैधव्यं शिशुमरणं निशान्धलग्ने ।**
**पङ्ग्वङ्गे निखिलधनानि नाशमीयुः सर्वत्राधिपगुरुदृष्टिभिर्न दोषः ॥८३॥**

भावार्थः- बहिरो लग्नमा विवाह भए दरिद्रता, दिवान्ध लग्नमा विवाह भए कन्या-विधवा, रात्र्यन्ध लग्नमा विवाह भए सन्तानको मृत्यु तथा पङ्गु लग्नमा विवाह वर-कन्याको सारा सम्पत्ति नष्ट हुन्छ । यी सबै लग्नलाई स्वामी र बृहस्पतिको दृष्टि भए दोष हुँदैन ।

| लग्नको नाम | लग्नको समय | लग्न | दिने फल |
|---|---|---|---|
| बधिर | दिवा | तुला र वृश्चिक | दरिद्रता |
| | रात्री | धनु र मकर | |
| अन्ध | दिवा | सिंह, वृष र मेष | विधवा |
| | रात्री | कन्या, मिथुन र कर्कट | शिशु मरण |
| पङ्गु | दिवा | कुम्भ | सबै सम्पत्तिको नाश |
| | रात्री | मीन | |



**शुभ नवांश**

**कार्मुकतौलिककन्यायुग्मलवे झषगे वा ।**
**यर्हि भवेदुपयामस्तर्हि सती खलु कन्या ॥८४॥**

भावार्थः- कुनै पनि लग्नमा धनु, तुला, कन्या, मिथुन वा मीनको नवांशमा यदि कन्याको विवाह भए उ पतिव्रता हुन्छे ।

### तोकिएको शुभ नवांशमा पनि निषेधित योग

**अन्त्यनवांशे न च परिणेया काचन वर्गोत्तममिह हित्वा ।**
**नो चरलग्ने चरलवयोगं तौलिमृगस्थे शशभृति कुर्यात् ॥८५॥**

भावार्थः- कुनै पनि कन्याको बिहेका लागि गर्न हुने नवांशमा पनि वर्गोत्तमलाई छोडी अन्तिम नवांशमा बिहे गर्नु हुँदैन । (अन्तिम नवांश वर्गोत्तम भए दोष छैन-द्विस्वभाव लग्नमा द्विस्वभावको अन्तिम नवांश) । वर्गोत्तममा पनि यदि तुला र मकर राशिका चन्द्रमा भए त चरलग्नमा चरको नवांशमा विवाह गर्नु हुँदैन ।

### लग्नको स्थिति र भविष्यवाणि (लग्नभङ्ग योग)



**व्यये शनिः खेऽवनिजस्तृतीये भृगुस्तनौ चन्द्रखला न शस्ताः ।**
**लग्नेट् कविग्लौश्च रिपौ मृतौ ग्लौर्लग्नेट् शुभाराश्च मदे च सर्वे ॥८६॥**

भावार्थः- विवाहलग्नबाट बाह्रौंको शनि, दशौंको मङ्गल, तेश्रो शुक्र, लग्नको चन्द्रमा र लग्नका पाप ग्रह (सूर्य, मङ्गल, शनि, राहु र केतु) शुभ हुँदैन । छैटौं स्थानमा लग्नका स्वामी शुक्र र चन्द्रमा, आठौं स्थानमा चन्द्रमा-लग्नेश-सबै शुभ ग्रहहरु र मङ्गल तथा सातौं स्थानमा कुनै पनि ग्रह भए विवाह उत्तम हुँदैन । यसैले यस्तो स्थितिलाई छोड्नू ।

### विवाहकालीन शुभग्रह

**त्र्यायाष्टषट्सु रविकेतुतमोऽर्कपुत्रास्त्र्यायारिगः क्षितिसुतो द्विगुणायगोब्जः।**
**सप्तव्ययाष्टरहितौ ज्ञगुरु सितोऽष्टत्रिद्यूनषड्व्ययगृहान् परिहृत्य शस्तः ॥८७॥**

भावार्थः- विवाहलग्नबाट ३।११।८ स्थानमा सूर्य-शनि-राहु-केतु, ३।६।१० स्थानमा मङ्गल, २।३।११ स्थानमा चन्द्रमा, ७।८।१२ स्थान बाहेकका स्थानमा बुध-बृहस्पति तथा ८।३।७।६।१२ स्थानबाहेकका स्थानमा शुक्र हुनु उत्तम हुन्छ ।

### कर्तरी आदि महादोष बारना

**पापौ कर्तरिकारकौ रिपुगृहे नीचास्तगौ कर्तरी**
**दोषो नैव सितेऽरिनीचगृहगे तत्षष्ठदोषोऽपि न ।**
**भौमेऽस्ते रिपुनीचगे न हि भवेद्भौमोऽष्टमो दोषकृ-**
**न्नीचे नीचनवांशके शशिनि रिःफाष्टारिदोषोऽपि न ॥८८॥**

भावार्थः- कर्तरी दोष गराउने पापग्रह आआफ्ना शत्रु ग्रहका राशिमा छन् वा आफ्नो नीच राशिमा छन् भने वा सूर्यसँगै अस्त भए कर्तरी दोष हुँदैन । छैटौं स्थानको शुक्र अशुभ फल दिने भनिए पनि आफ्नो शत्रुको ४।५ राशि वा नीच ६ राशिमा भए छैटौंको शुक्रको दोष लाग्दैन । मङ्गल आठौं स्थानमा दोषी भए पनि सूर्यसँगै अस्ताए, आफ्ना शत्रुका राशि (३।६) वा नीच राशि (४) मा भए आठौं मङ्गल दोषी हुँदैन । आफ्नो नीच राशि (८) वा कुनै लग्नमा ८ राशिको नवांशमा चन्द्रमा भए ६।८।१२ औं स्थानको चन्द्रमा दोषकारक हुँदैन ।

### वर्ष आदि दोष

**अब्दायनर्तुतिथिमासभपक्षदग्धतिथ्यन्धकाणबधिराङ्गमुखाश्च दोषाः ।**
**नश्यन्ति विद्गुरुसितेष्विह केन्द्रकोणे तद्वच्च पापविधुयुक्तनवांशदोषः ॥८९॥**

भावार्थः- बुध-बृहस्पति र शुक्र ःयी तीनै शुभ ग्रह (आफ्नो नीच राशि र शत्रु राशिलाई छोडी) केन्द्र वा त्रिकोण (१।४।७।१०।९।५) मा भए अब्द-अयन-ऋतु-तिथि-मास-नक्षत्र-पक्ष-दग्धतिथि-अन्धकरण बधिरादि लग्न जस्ता सबै दोष नष्ट हुन्छन् । पापग्रह वा चन्द्रमाले युक्त नवांश दोष पनि नष्ट हुन्छ ।

### अन्य दोष



**केन्द्रे कोणे जीव आये रवौ वा लग्ने चन्द्रे वापि वर्गोत्तमे वा ।**
**सर्वे दोषा नाशमायान्ति चन्द्रे लाभे तद्वद्दुर्मुहूर्तांशदोषाः ॥९०॥**

भावार्थः- विवाहलग्नबाट केन्द्र तथा त्रिकोणमा (१।४।७।१०।९।५) बृहस्पति, एघारौं स्थानमा सूर्य, लग्नमा वा वर्गोत्तममा (पूर्ण) चन्द्रमा भए सबै दोष नाश हुन्छन् । यसै गरी विवाह लग्नबाट एघारौं स्थानमा चन्द्रमा भए दुष्ट मुहूर्त र पापग्रहले युक्त नवांशको दोष पनि नष्ट हुन्छ ।

### सामान्य दोष

**त्रिकोणे केन्द्रे वा मदनरहिते दोषशतकं**

**हरेत् सौम्यः शुक्रो द्विगुणमपि लक्षं सुरगुरुः ।**
**भवेदाये केन्द्रेऽङ्गप उत लवेशो यदि तदा**
**समूहं दोषाणां दहन इव तूलं शमयति ॥९१॥**

भावार्थः- विवाहलग्नबाट त्रिकोण र सातौँलाई छाडी केन्द्रमा (१।४।१०।९।५) बुध भए १०० दोष, शुक्र भए त्यसको दोबर दोष, बृहस्पति भए एक लाख दोष नाश गर्दछ । विवाह लग्नको वा नवमांशको स्वामी एघारौँ वा केन्द्रमा भए त दोष-समूह कपासको पर्वत आगोले नष्ट भएझैँ नष्ट हुन्छ ।

**ग्रहको विंशोपक बल**

**द्वौ द्वौ ज्ञभृग्वोः पञ्चेन्दौ रवौ सार्द्धत्रयो गुरौ ।**
**रामा मन्दागुकेत्वारे सार्द्धैकैकं विशोपकाः ॥९२॥**

भावार्थः- बुध र शुक्रका २-२, चन्द्रमाको ५, सूर्यको ३ तथा शनि-राहु-केतु र मङ्गलको अढाइ-अढाइ विंशोपक हुन्छ ।

**विवाह पछिको पारिवारिक सम्बन्ध**

**श्वश्रुः सितोऽर्क श्वशुरस्तनुस्तनुर्जामित्रपः स्याद् दयितो मनः शशी ।**
**एतद्बलं सम्प्रतिभाव्य तान्त्रिकस्तेषां सुखं सम्प्रवदेद्विवाहतः ॥९३॥**

भावार्थः- शुक्रले सासू, सूर्यले ससुरा, लग्नले आफ्नो शरीर, लग्नबाट सातौंका स्वामीबाट पति तथा चन्द्रमा मन हुन्छन् । ज्यौतिषीले विवाहका बेला यिनै ग्रहको

बलनिर्बल हेरी ती कन्याको विवाह पछिको परिवार-सम्बन्धका विषयमा बताउनु पर्दछ ।

### वर्णसंकरको विवाह मुहूर्त्त

**कृष्णे पक्षे सौरिकुजार्केऽपि च वारे**
**वर्ज्ये नक्षत्रे यदि वा स्यात्करपीडा ।**
**संकीर्णता तर्हि सुतायुर्धनलाभ-**
**प्रीतिप्राप्त्यै सा भवतीह स्थितिरेषा ॥९४॥**

भावार्थः- कृष्णपक्ष, शनिबार, मङ्गलबार, आइतबार, विवाहमा वर्जित नक्षत्रमा विवाह गर्दा वर्णसंकरलाई पुत्र, आयु, धन, लाभ र माया प्राप्त हुन्छ ।



### सूर्यको स्थिति र विवाह

**गान्धर्वादिविवाहेऽर्काद् वेदनेत्रगुणेन्दवः ।**
**कुयुगाङ्गाग्निभूरामास्त्रिपद्यामशुभाः शुभाः ॥९५॥**

भावार्थः- गान्धर्व आदि विवाहमा त्रिपदीचक्रमा सूर्य रहेका नक्षत्रबाट ४।२।३।१। १।४।६।३।१।३ औं नक्षत्र क्रमैले अशुभ र शुभ हुन्छन् । (सूर्यनक्षत्रबाट ४ नक्षत्र अशुभ, त्यसपछि २ शुभ..) ।

विवाहको तयारी

विधोर्बलमवेक्ष्य वा दलनकण्डनं वारकं
गृहाङ्गणविभूषणान्यथ च वेदिकामण्डपान् ।
विवाहविहितोडुभिर्विरचयेत् तथोद्वाहतो
न पूर्वमदमाचरेत् त्रिनवषण्मिते वासरे ॥९६॥

भावार्थः- विवाह अघि वर र कन्याको चन्द्रबल हेरेर वा सम्भव नभए नहेरीकन विवाह गर्नहुने नक्षत्रमा बुकुवा आदि दल्ने, धान आदि कुट्ने, गहुँ आदि पिँध्ने, मङ्गल कलश सजाउने, घर-आँगन आदि सिँगार्ने, गुप्त कोठा बनाउने, वेदी बनाउने तथा मण्डप बनाउने आदि जस्ता विवाह सम्बन्धी सबै कामगर्न उत्तम हुन्छ । तर विवाहभन्दा ३।६।९ दिन अघि उल्लेखित कामको शुरुवात नगर्नू ।



विवाहको मण्डप निर्माण तथा उठाउने विधि

हस्तोच्छ्राया वेदहस्तैः समन्तात्तुल्या वेदी सद्मनो वामभागे ।
युग्मे घस्रे षष्ठहीने च पञ्चसप्ताहे स्यान्मण्डलपोद्वासनं सत् ॥९७॥

भावार्थः- विवाह मण्डपको उत्तरतिर १ हात अग्लो चारै तिर बराबर ४-४ हात लामो र चौडा वेदी बनाउनु पर्दछ । विवाह पछि छैटौं दिन बाहेकका जोर दिनमा तथा ५ र ७ बिजोर दिनमा मण्डप उठाउनु उत्तम हुन्छ ।

### विवाहको तयारी

**सूर्येऽङ्गनासिंहघटेषु शैवे स्तम्भोऽलिकोदण्डमृगेषु वायौ ।**
**मीनाजकुम्भे निर्ऋतौ विवाहे स्थाप्योऽग्निकोणे वृषयुग्मकर्के ॥९८॥**

भावार्थः- जब सूर्य कन्या-सिंह-तुलामा हुन्छ मण्डप ईशान कुनामा, वृश्चिक-धनु-मकरमा हुँदा वायव्य कुनामा, कुम्भ-मीन-मेषमा हुँदा नैर्ऋत्य कुनामा र वृष-मिथुन-कर्कटमा हुँदा आग्नेय कुनामा स्तम्भको स्थापना गर्नू ।

### गोधूली काल

**नास्यामृक्षं न तिथिकरणं नैव लग्नस्य चिन्ता**
**नो वा वारो न च लवविधिर्नो मुहूर्तस्य चर्चा ।**
**नो वा योगो न मृतिभवनं नैव जामित्रदोषो**
**गोधूलिःसा मुनिभिरुदिता सर्वकार्येषु शस्ता ॥९९॥**

भावार्थः- गोधूलि कालमा नक्षत्र, तिथि, करण, लग्न, वार, नवांश, मुहूर्त वा योग, मृत्युभवन, जामित्र दोष आदि कुनै कुराको पनि विचार गर्नु पर्दैन । किनकि यो गोधूलि काललाई मुनिहरुले सबै कार्यमा प्रशस्त हुने बताएका छन् ।

**पिण्डीभूते दिनकृति हेमन्तर्तौ स्यादर्द्धास्ते तपसमये गोधूलिः ।**
**सम्पूर्णास्ते जलधरमालाकाले त्रेधा योज्या सकलशुभे कार्यादौ ॥१००॥**

भावार्थः- हेमन्त ऋतुमा सूर्य गोलाकार र राम्ररी देखिइँदा, तपसमय (चैत्र, बैशाख, जेठ र असार) मा सूर्यबिम्ब आधा अस्त हुँदा, जलधरकालाकाल (साउन, भदौ, असौज र कार्तिक) मा सम्पूर्ण सूर्यबिम्ब अस्त भए पछिको १ घडीसम्म गोधूलि काल हुन्छ । यी तीनै थरी गोधूलिकाल सबै शुभकार्यमा अति शुभकारक हुन्छ ।

**अस्तं याते गुरुदिवसे सौरे सार्के लग्नाज्मृत्यौ रिपुभवने लग्ने चेन्दौ ।**
**कन्यानाशस्तनुमदमृत्युस्थे भौमे वोढुर्लाभे धनसहजे चन्द्रे सौख्यम् ॥१०१॥**

भावार्थः- बिहीबार सूर्यास्त हुँदा र शनिबार सूर्य रहँदै गोधूलि शुभफलदायक हुन्छ । गोधूलिकालमा यदि लग्नबाट आठौं, छैटौं तथा लग्नमा चन्द्रमा परे विवाह पछि कन्याको नाश हुन्छ तथा लग्न, सातौं र आठौं स्थानमा मङ्गल परे वरको मृत्यु हुन्छ । तर पनि गोधूलिकालमा चन्द्रमा लाभ-धन-तृतीय स्थानमा भए वर-वधू दुवैलाई सुख प्राप्त हुन्छ ।

स्पष्टगति

**मेषादिगेर्केऽष्टशरा नगाक्षाः सप्तेषवः सप्तशरा गजाक्षाः ।**
**गोऽक्षाः खतर्काः कुरसाः कुतर्काः क्वङ्गानि षष्टिर्नवपञ्च भुक्तिः ॥१०२॥**

भावार्थः- मेषादि राशिमा सूर्य रहँदा क्रमैले ५८, ५७, ५७, ५७, ५८, ५९, ६०, ६१, ६१, ६१, ६० र ५९ कला स्पष्टगति हुन्छ ।

| राशि | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| गतिकला | ५८ | ५७ | ५७ | ५७ | ५८ | ५९ | ६० | ६१ | ६१ | ६१ | ६० | ५९ |

### स्पष्टसूर्य

**सङ्क्रान्तियातघस्राद्यैर्गतिघ्नी खषट् हृता ।**
**लब्धेनांशादिना यातर्क्षं स्पष्टभास्करः ॥१०३॥**

भावार्थः- जुन दिन जति घडीपलामा सूर्यको सङ्क्रान्ति लागेको हो त्यो समयबाट इष्टकालसम्म जति घडीपला हुन्छ त्यसलाई इष्टराशिसम्बन्धी बताइएको कलाले गुणन गरी ६० ले भाग गर्नू । जति भागफाल आउँछ त्यसलाई बितेको सङ्क्रान्तिको राशिसंख्यामा जोड्नू तत्कालिक राश्यादि स्पष्ट सूर्य हुन्छ ।

### लग्नको षड्वर्ग साधन

**तनोरिष्टांशकात् पूर्वं नवांशा दशसङ्गुणाः ।**
**रामाप्ता लब्धमंशाद्यं तनोर्वर्गादिसाधने ॥१०४॥**

भावार्थः- विवाह आदिका लागि जुन शुभलग्नमा दोष नभएको नवांश बिचार गरिएको छ त्यसभन्दा अघि जति नवांश बिते त्यो संख्यालाई १० ले गुणन गरी ३ ले भाग गरेर आउने भागफल भुक्तांशादि लग्नको षड्वर्ग साधन गर्न उपयोगमा ल्याइन्छ ।

### विवाहकालिन लग्ननवांशको इष्ट समय

**अर्काल्लग्नात्सायनाद्भोग्यभुक्तैर्भागैर्निघ्नात्स्वोदयात्खाग्निभक्तात् ।**
**भोग्यं भुक्तं चान्तरालोदयाढ्यं षष्ट्या भक्तं स्वेष्टनाड्यो भवेयुः ॥१०५॥**

भावार्थः- माथि बताए अनुसार लेराइएको स्पष्टसूर्य तथा लग्न दुवैमा अयनांश जोडेमा छुट्टाछुट्टै सायनार्क र सायन लग्न हुन्छ । सायनार्कको भोग्यांश र सायनलग्नको भुक्तांशलाई छुट्टाछुट्टै आफ्नो देशको (सूर्य) उदयमानले गुणन गरी भागफल पहिलो स्थानमा सूर्यको भोग्य पल हुन्छ । दोश्रो स्थानमा लग्नको भुक्तफल आउँदछ । दुवैको जोडमा सूर्य र लग्नको बीचको राशिको उदयमान जोडेर ६० ले भाग गर्दा सूर्योदयबाट विवाहकालिन लग्ननवांशको इष्ट समय घट्यादि प्राप्त हुन्छ ।

**चेल्लग्नार्कौ सायनावेकराशौ तद्विश्लेषघ्नोदयः खाग्निभक्तः ।**
**स्वेष्टः कालो लग्नमूनं यदाऽर्काद्रात्रौ शेषेऽर्कात्सषड्भं निशायाम्॥१०६॥**

भावार्थः- यदि सायनलग्न सायनसूर्य एउटै राशिमा भएमा त दुबैको अन्तरांशलाई उदयमानले गुणन गरी ३० ले भाग गर्दा आउने पलादि भागफल यदि लग्नमा सूर्य घटेको भए सूर्योदयबाट इष्टकाल हुन्छ । यदि सूर्यमा लग्न घटाइएको छ भने त्यसरी आएको भागफल रात्रीशेष हुन्छ ।

विवाहमा जुराउने काम

**उत्पातान् सह पातदग्धतिथिभिर्दुष्टांश्च योगांस्तथा**
**चन्द्रेज्योशनसामथास्तमयनं तिथ्याः क्षयर्द्धी तथा ।**
**गण्डान्तं च सविष्टिसङ्क्रमदिनं तन्वंशपास्तं तथा**
**तन्वंशेशविधूनथाष्टरिपुगान् पापस्य वर्गांस्तथा ॥१०७॥**
**सेन्दुक्रूरखगोदयांशमुदयास्ताशुद्धिचण्डायुधान्**
**खार्जूरं दशयोगयोगसहितं जामित्रलत्ताव्यधम् ।**

बाणोपग्रहपापकर्तरि तथा तिथ्यृक्षयोगोत्थितं
दुष्टं योगमथार्द्धयामकुलिकाद्यान् वारदोषानपि ॥१०८॥
क्रूराक्रान्तविमुक्तभं ग्रहणभं यत्क्रूरगन्तव्यभं
त्रेधोत्पातहतं च केतुहतभं सन्ध्योदितं भं तथा ।
तद्वच्च ग्रहभिन्नयुद्धगतभं सर्वानिमान् सन्त्यजे-
दुद्वाहे शुभकर्मसु ग्रहकृतान् लग्नस्य दोषानपि ॥१०९॥

भावार्थः- उत्पात, महापात, दग्धतिथि, दुष्टयोग, चन्द्र-बृहस्पति-शुक्रको अस्त, तिथिक्षय र वृद्धि, गण्डान्त, भद्रा, सङ्क्रान्ति, लग्नेश र नवांशेषको अस्त, लग्नेश-नवांशेष र चन्द्रमाको ६।८ स्थानमा रहेको दोष, पापग्रहको षड्वर्ग, चन्द्र र पापग्रहले युक्त लग्न र नवांश, उदय-अस्तको शुद्धि, चण्डायुधको दोष, खार्जूर दोष, दशयोग, जामित्र, लत्तादोष, वेध, बाण, उपग्रह, पापकर्तरि, तिथि-नक्षत्र-वारबाट उत्पन्न कुयोग, अर्धयाम, कुलिक आदि वारदोष, पापग्रहले युक्त वा भुक्त नक्षत्र, ग्रहणका नक्षत्र, अब पापग्रह जाने नक्षत्र, जुन नक्षत्रमा दिव्य-अन्तरिक्ष-भौममध्ये कुनै उत्पात भएको छ त्यो, केतु उदय नक्षत्र, जुन नक्षत्र सूर्यास्त समयमा पूर्व क्षितिजमा उदाएको छ, ग्रहबाट भिन्न नक्षत्र, ग्रहको युद्धवाला नक्षत्र र ग्रहकृत लग्नदोष आदि सबै दोष विवाह तथा अन्य शुभकार्यमा पनि त्याग्नू । (निर्दोष कुनै पनि मुहूर्त भेटिँदैन त्यसैले गुण धेरै भएकोमा वा दोष मेटाएर व्यवहार गर्नू) ।



विवाह, व्रतबन्ध आदिमा तेलआदि लगाउने साइत

मेषादिराशिजवधूवरयोर्बडोश्च तैलादिलापनविधौ कथिताऽत्र सङ्ख्या ।
शैला दिशः शरदिगक्षनगाद्रिबाणा बाणाक्षबाणगिरयो विबुधैस्तु कैश्चित् ॥११०॥

भावार्थः- मेष आदि राशिमा जन्मने वर र वधू तथा उपनयन गरिने वटुकलाई तेल आदि लगाउन पण्डितहरुले क्रमैले ७, १०, ५, १०, ५, ७, ७, ५, ५, ५, ५ र ७ दिन पहिले देखि उत्तम हुन्छ भनेका छन् ।

| जन्मराशि | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| कति दिन अघि देखि तेल लगाउन शुरु गर्ने | ७ | १० | ५ | १० | ५ | ७ | ७ | ५ | ५ | ५ | ५ | ७ |

## इति मुहूर्त्तचिन्तामणौ विवाहप्रकरणं समाप्तम्

# वधुप्रवेशप्रकरण

### वधूप्रवेशको साइत

समाद्रिपञ्चाङ्कदिने विवाहाद्वधूप्रवेशोऽष्टिदिनान्तराले ।
शुभः परस्ताद्विषममाब्दमासदिनेऽक्षवर्षात्परतो यथेष्टम् ॥१॥

भावार्थः- विवाह दिनदेखिका १६ दिन भित्रका जोर दिन वा ५।७।९ बिजोर दिनमा पहिलो पटक वधूप्रवेश शुभ हुन्छ । १६ दिन पछि १ महिनासम्म बिजोर दिनमा, १ महिना पछि १ वर्षसम्म बिजोर महिनामा, १ वर्षपछि ५ वर्षसम्म ३।५ वर्षमा र त्यसपछि स्वेच्छाले जुनसुकै वर्षमा वधूप्रवेश गर्नु पर्दछ ।



ध्रुवक्षिप्रमृदुश्रोत्रवसुमूलमघानिले ।
वधूप्रवेशः सन्नेष्टो रिक्तारार्के बुधे परैः ॥२॥

भावार्थः- तीनै उत्तरा, रोहिणी, हस्ता, अश्विनी, पुष्य, मृगशिरा, रेवती, चित्रा, अनुराधा, श्रवण, धनिष्ठा, मूल, मघा र स्वाती यि १६ नक्षात्रमा प्रथम पटकको वधूप्रवेश उत्तम हुन्छ । चतुर्थी, नवमी र चतुर्दशी तिथि तथा मङ्गल र आइतबार बधूप्रवेश अशुभ हुन्छ । कसैले त बुधबार पनि बधुप्रवेश हुने भनेका छन् ।

### विवाह पछि पानी छल्ने साइत

ज्येष्ठे पतिज्येष्ठमथाधिके पतिं हन्त्यादिमे भर्तृगृहे बधूः शुचौ ।
श्वश्रुं सहस्ये श्वशुरं क्षये तनुं तातं मधौ तातगृहे विवाहतः ॥३॥

भावार्थः- विवाह पछि पहिलो जेठ महिनामा यदि वधू पतिको घरमा रहन्छे भने आफ्नो लोग्नेको जेठो दाजुलाई नष्ट पार्दछे । पहिलो अधिकमासमा बसे पतिलाई, पहिलो आषाढमा बसे सासुलाई, पहिलो पुषमा बसे ससुरालाई तथा पहिलो क्षयमासमा बसे आफ्नै शरीरलाई नाश गर्दछे । पहिलो चैत्रमा पिताका घर बसे पितालाई नै नष्ट गर्दछे । यदि जेठाजू, ससुरा, सासु एवं पिता छैनन् भने दोष लाग्दैन ।

इति मुहूर्त्तचिन्तामणौ वधूप्रवेशप्रकरणं समाप्तम्

# द्विरागमनप्रकरण

दोश्रो पटक वधूप्रवेशको मुहूर्त

**चरेदथौजहायने घटालिमेषगे रवौ रवीज्यशुद्धियोगतः शुभग्रहस्य वासरे ।**
**नृयुग्ममीनकन्यकातुलावृषे विलग्नके द्विरागमं लघुध्रुवे चरेऽस्रपे मृदूडुनि ॥१॥**

भावार्थः- विवाहपछि पहिलोपटक वधूप्रवेश भएर विजोर वर्षमा, कुम्भ-वृश्चिक-मेष राशिका सूर्यमा, सूर्य-बृहस्पति शुद्ध हुँदा, चन्द्र-बुध-बृहस्पति-शुक्र बारमा, मिथुन-मीन-कन्या-तुला-वृष लग्नमा, हस्ता-अश्विनी-पुष्य-तीनै उत्तरा-रोहिणी-स्वाती-पुनर्वसु-श्रवण-धनिष्ठा-शतभिषा-मूल- मृगशिरा- रेवती-चित्रा र अनुराधा नक्षत्रमा बाबुको घर आएकी वधूले दोश्रो पटक पतिगृह जान उत्तम हुन्छ ।



**दैत्येज्यो ह्यभिमुखदक्षिणे यदि स्याद्गच्छेयुर्नहि शिशुगर्भिणीनवोढाः ।**
**बालश्चेद्व्रजति विपद्यते नवोढा चेद्वन्ध्या भवति च गर्भिणी त्वगर्भा ॥२॥**

भावार्थः- शुक्र सामुन्ने वा दाहिनेतिर हुँदा बालकयुक्त, गर्भवती र नयाँ दुलही स्त्री आफ्नो पतिका घरमा नजानू, किन कि सम्मुख वा दाहिने शुक्र हुँदा पतिका घरमा जाने स्त्रीको बच्चा मर्दछ, गर्भवतीको गर्भ नष्ट हुन्छ र नयाँ दुलही वन्ध्या हुन्छे ।

**नगरप्रवेशविषयाद्युपद्रवे करपीडने विबुधतीर्थयात्रयोः ।**
**नृपपीडने नववधूप्रवेशने प्रतिभार्गवो भवति दोषकृन्न हि ॥३॥**
**पित्र्ये गृहे चेत्कुचपुष्पसम्भवः स्त्रीणां न दोषः प्रतिशुक्रसम्भवः ।**

भृग्वङ्गिरोवत्सवसिष्ठकश्यपात्रीणां भरद्वाजमुनेः कुले तथा ।।४।।

भावार्थः- नगर-प्रवेश, कुनै ठूलो रोग-उत्पात-डाँका-चोरी-अग्निदाह जस्ता आपतमा, विवाहमा, देवदर्शनमा, तीर्थयात्रामा, नृपपीडामा र नववधू प्रवेशमा सम्मुखको शुक्र दोषकारक हुँदैन । बाबुकै घरमा स्तन बढेकी वा परसरेकी स्त्री भए सम्मुख वा दक्षिण शुक्रको दोष हुँदैन । त्यस्तै, भृगु, अङ्गिरा, वत्स, वसिष्ठ, कश्यप, अत्रि र भारद्वाज ऋषिका कुलकालाई पनि सामुको र दाहिने शुक्रको दोष हुँदैन भनिएको छ ।

इति मुहूर्त्तचिन्तामणौ द्विरागमनप्रकरणं समाप्तम्

## अग्न्याधानप्रकरण

**स्यादग्निहोत्रविधिरुत्तरगे दिनेशे मित्रध्रुवान्त्यशशिशक्रसुरेज्यधिष्ण्ये ।**
**रिक्तासु नो शशिकुजेज्यभृगौ न नीचे नास्तङ्गते न विजिते न च शत्रुगेहे ॥१॥**

भावार्थः- उत्तरायणमा विशाखा-कृत्तिका-तीनै उत्तरा-रोहिणी-रेवती-मृगशिरा- ज्येष्ठा र पुष्य नक्षत्रमा अग्निहोत्र कर्म गर्नु शुभ हुन्छ । चतुर्थी-नवमी-चतुर्दशी तिथिमा, चन्द्र-मङ्गल-बृहस्पति-शुक्र ग्रह नीच राशिमा बसी अस्त भएमा वा ग्रह युद्धमा पराजित भएमा वा शत्रुका राशिमा गएका भएमा अग्निहोत्र स्वीकार गर्नु शुभ हुँदैन ।

**नो कर्कनक्रझषकुम्भनवांशलग्ने नोऽब्जे तनौ रविशशीज्यकुजे त्रिकोणे ।**
**केन्द्रर्क्षषट्त्रिभवगे च परैस्त्रिलाभषट्खस्थितैर्निधनशुद्धियुते विलग्ने ॥२॥**

भावार्थः- कर्कट-मकर-मीन-कुम्भ राशिको नवांश वा लग्नमा, लग्नमा चन्द्रमा हुँदा, सूर्य-चन्द्र-बृहस्पति-मङ्गल १।३।४।५।६।७।९।१०। ११ मा हुँदा तथा सूर्य-शनि-राहु-केतु ३।६।१०।११ स्थानमा हुँदा तथा आठौँ स्थान शुद्ध हुँदाको स्थितिमा अग्निहोत्र शुरु गर्नु उत्तम हुन्छ ।

**चापे जीवे तनुस्थे वा मेषे भौमेऽबरे द्युने ।**
**षट्त्र्यायेऽब्जे रवौ वा स्याज्जाताग्निर्यजति ध्रुवम् ॥३॥**

भावार्थः- धनु राशिको बृहस्पति लग्न, मेषको मङ्गल लग्न, मङ्गल सातौं वा दशौं स्थानमा, तेश्रो-छैटौं वा एघारौं स्थानमा चन्दसूर्य हुँदा अग्न्याधान शुरु गर्ने व्यक्ति धेरै दिनसम्म निश्चय नै ज्योतिष्टोम यज्ञ गर्दछ ।

**इति मुहूर्त्तचिन्तामणावग्न्याधानप्रकरणं समाप्तम्**

# राजाभिषेकप्रकरण

राज्याभिषेक गर्ने साइत

**राजाभिषेकः शुभ उत्तरायणे गुर्विन्दुशुक्रैरुदितैर्बलान्वितैः ।**
**भौमार्कलग्नेशदशेशजन्मपैर्नो चैत्ररिक्तारनिशामलिम्लुचे ॥१॥**

भावार्थः- उत्तरायणमा, बृहस्पति-चन्द्रमा-शुक्र उदाए पछि, मङ्गल-सूर्य-लग्नेश-दशेश-जन्मराशि स्वामी सबै बलिया भएका बेलामा राज्याभिषेक उत्तम हुन्छ । चैतको महिना, चतुर्थी-नवमी-चतुर्दशी तिथि, मङ्गलवार, रातको समय र मलमासमा राज्याभिषेक गर्नु देशकै लागि अशुभ हुन्छ ।

**शाक्रश्रवःक्षिप्रमृदुध्रुवोडुभिः शीर्षोदये वोपचये शुभे तनौ ।**
**पापैस्त्रिषाष्ठायगतैः शुभग्रहैः केन्दैत्रिकोणायधनत्रिसंस्थितैः ॥२॥**

भावार्थः- ज्येष्ठा-श्रवण-हस्ता-अश्विनी-पुष्य-मृगशिरा-रेवती-चित्रा-अनुराधा-तीनै उत्तरा र रोहिणी नक्षत्रमा, मिथुन-सिंह-कन्या-तुला-वृश्चिक-कुम्भ लग्नमा वा राजाको जन्मराशि तथा जन्मलग्नबाट ३।६।१०।११ राशिको शुभलग्नमा, पापग्रह ३।६।११ मा र शुभग्रह १।४।७।१०।९।५।११। २।३ मा हुँदा राजाको अभिषेक उत्तम भनिएको छ ।

**पापैस्तनौ रुङ्निधने मृतिः सुते पुत्रातिरर्थव्ययगैर्दरिद्रता ।**
**स्यात् खेऽलसो भ्रष्टपदो द्युनाम्बुगैः सर्वं शुभं केन्द्रगतैः शुभग्रहैः ॥३॥**

भावार्थः- पापग्रह अभिषेक लग्नमा भए राजालाई रोग, अभिषेक लग्नबाट आठौंमा पापग्रह भए मृत्यु, पाँचौंमा भए पुत्रलाई कष्ट, धन-व्यय स्थानमा भए दरिद्रता, दशौंमा भए आलस्यता, ४।७ मा भए पदभ्रष्ट हुन्छ । यदि केन्द्रमा सबै शुभ ग्रह परे सर्वथा शुभैशुभ फल हुन्छ, सबै दोष नष्ट हुन्छन् ।

**गुरुर्लग्नकोणे कुजोऽरौ सितः खे स राजा सदा मोदते राजलक्ष्मा ।**
**तृतीयायगौ सौरिसूर्यौ खवन्ध्वोर्गुरुश्चेद्धरित्री स्थिरा स्यान्नृपस्य ॥४॥**

भावार्थः- अभिषेक कालमा बृहस्पति लग्न ५।९ मा भए, मङ्गल ६, शुक्र १० औंमा भए त्यो राजा सदा राज्यलक्ष्मीले युक्त हुन्छ र प्रसन्न रहन्छ । तेश्रो शनि र एघारौं सूर्य तथा दशौं वा चौथो बृहस्पति भए राजाको भूमि स्थिर रहन्छ ।

**इति मुहूर्त्तचिन्तामणौ राजाभिषेकप्रकरणं समाप्तम्**

# यात्राप्रकरण

### यात्रा र जन्मलग्न

यात्रायां प्रविदितजन्मनां नृपाणां दातव्यं दिवसमबुद्धजन्मनां च ।
प्रश्नाद्यैरुदयनिमित्तमूलभूतैर्विज्ञाते ह्यशुभशुभे बुधः प्रदद्यात् ॥१॥

भावार्थः- पण्डितले जसको जन्मकालीन शुभ र अशुभ राजयोग आदि थाहा पाइएको हुन्छ त्यस्ता राजाका तथा जसका जन्मकाल थाहा छैन तिनको प्रश्नकालीन लग्न र साइत मार्फत उसका शुभ र अशुभ राजयोग आदि थाहा पाई बताउन योग्य कुरा र यात्रामा निस्कने दिन बताउनू ।



### प्रश्नकालीन शुभ यात्रायोग

जननराशितनू यदि लग्नगे तदधिपौ यदि वा तत एव वा ।
त्रिरिपुखायगृहं यदि वोदये विजय एव भवेद्वसुधापतेः ॥२॥

भावार्थः- जसको जन्मराशि वा जन्मलग्न प्रश्नलग्नमा हुन्छ अथवा जसको जन्मराशि वा जन्मलग्नको स्मालिक प्रश्नलग्नमा हुन्छ अथवा जसको जन्मराशि वा जन्मलग्नबाट तेश्रो, छैटौं, दशौं र एघारौं स्थानमा प्रश्नलग्न पर्दछ त्यस्ता राजाको युद्धयात्रा विजयशाली हुन्छ ।

रिपुजन्मलग्नभमथाधिपौ तयोस्ततएववोपचसद्म चेद् भवेत् ।
हिबुके द्यूनेऽथ शुभवर्गकस्तनौ यदि मस्तकोदयगृहं तदा जयः ॥३॥

भावार्थः- अथवा जसको शत्रुको जन्मराशि वा जन्मलग्न प्रश्नलग्नबाट चौथो वा सातौं स्थानमा हुन्छ अथवा जसका शत्रुको जन्मराशिको वा जन्मलग्नको मालिक प्रश्नलग्नबाट चौथो वा सातौं स्थानमा हुन्छ अथवा जसका शत्रुको जन्मराशि वा जन्मलग्नबाट तेश्रो, छैटौं, दशौं र एघारौं राशि प्रश्नलग्नबाट चौथो वा सातौं स्थानमा पर्दछ अथवा जसका शुभग्रहको घर, होरा, द्रेष्काण, नवांश आदि षड्वर्ग प्रश्नलग्नमा छन् अथवा जसका मिथुन, सिंह, कन्या, तुला, वृश्चिक र कुम्भमध्ये कुनै राशि प्रश्नलग्नमा छन् त्यस्ता यात्रा गर्ने राजाको जित हुन्छ ।

**यदि पृच्छतनौ वसुधा रुचिरा शुभवस्तु यदि श्रुतिदर्शनगम् ।**
**यदि पृच्छति चादरतश्च शुभग्रहदृष्टयुतं चरलग्नमपि ॥४॥**

भावार्थः- प्रश्न सोद्धा जमिन, फूल, दूबो, देवमन्दिर आदि शुभकुराले मनोरम होस्; प्रश्न सोद्धा कुनै शुभ कुरा देखियून् वा सुनियून्, आदरपूर्वक सोधियोस् अथवा मेष, कर्कट, तुला, मकर राशिमध्ये कुनै प्रश्नलग्नमा भई शुभग्रहले तिनलाई हेरेको भए वा त्यो ग्रहमा भए यात्रा गर्नेको विजय हुन्छ ।

**प्रश्नलग्न अनुसार अशुभ यात्राको योग**

**विधुकुजयुतलग्ने सौरिदृष्टेऽथ चन्द्रे मृतिभमदनसंस्थे लग्नभे भास्करेऽपि ।**
**हिबुकनिधनहोराद्यूनगे वापि पापे सपदि भवति भङ्ग प्रश्नकर्तुस्तदानीम् ॥५॥**

भावार्थः- प्रश्नकालिक लग्नमा चन्द्र र मङ्गल बसी शनिले देख्ने भए, चन्द्रमा आठौं वा सातौंमा भई प्रश्नलग्नमा सूर्य भए, सूर्य आठौं वा सातौंमा भई चन्द्रमा लग्नमा भए वा कुनै पापग्रह प्रश्नलग्नबाट ४।८।१।७ स्थानमा बसेको भए प्रश्न सोध्नेको यात्रा चाँडै नै भङ्ग हुन्छ वा यात्रा असफल हुन्छ ।

प्रश्नकाल अनुसार यात्रा गर्ने दिशाको निर्णय

**त्रिकोणे कुजात्सौरिशुक्रज्ञजीवा यदैकोऽपि वा नो गमोऽर्काच्छसी वा ।**
**बलीयांस्तु मध्ये तयोर्यो ग्रहः स्यात् स्वकीयां दिशं प्रत्युतासौ नयेच्च ॥६॥**

भावार्थः- प्रश्नकालमा शनि, शुक्र, बुध र बृहस्पतिमध्ये कुनै एक ग्रह मङ्गलबाट ९।५ स्थानमा वा चन्द्रमा सूर्यबाट ५।९ स्थानमा भए प्रश्नकर्ताको यात्रा तोकिएको दिशातिर हुँदैन । तीमध्ये जुन ग्रह धेरै बलियो अवस्थामा छ त्यसले यात्रीलाई आफ्नै दिशातिर लैजान्छ ।

**प्रश्ने गम्यदिगीशात् खेटः पञ्चमगो यः ।**
**बोभूयाद् बलयुक्तः स्वमाशां नयतेऽसौ ॥७॥**



भावार्थः- प्रश्नकालमा जानुपर्ने दिशाको मालिकबाट ५ औं स्थानमा जुन ग्रह बलियो भएर बसेको छ त्यसले प्रश्नकर्तालाई आफ्नै दिशामा लैजान्छ ।

सूर्य, तारा र यात्रा

**धनुर्मेषसिंहेषु यात्रा प्रशस्ता शनिज्ञोशनोनाशिगे चैव मध्या ।**
**रवौ कर्ममीनालिसंस्थेऽतिदीर्घा जनुः पञ्चसप्तत्रिताराश्च नेष्टाः ॥८॥**

भावार्थः- धनु-मेष-सिंह राशिको सूर्यमा यात्रा नगर्नू । शनि-बुध-शुक्रको राशि (१०।११।३।६।२।७) मा सूर्य हुँदा यात्रा मध्यम र कर्कट-मीन-वृश्चिक राशिको सूर्यमा गरिने लामो यात्रा फलविहीन हुन्छ । यात्राकालमा यात्रीको राशिनामबाट

१।३।५।७ औं नक्षत्रमा अर्थात् जन्मनक्षत्रबाट १।३।५।७।१०।१२।१४। १९।२१।२३।२५ औं नक्षत्रमा यात्रा नगर्नू ।

### यात्रामा अशुभ तिथि

**न षष्ठी न च द्वादशी नाष्टमी नो सिताद्या तिथिः पूर्णिमाऽमा न रिक्ता ।**
**हयादित्यमित्रेन्दुजीवान्त्यहस्त श्रवोवासवैरेव यात्रा प्रशस्ता ॥९॥**

भावार्थः- षष्ठी, द्वादशी, अष्टमी, शुक्ल परेवा, पूर्णिमा, औंसी र रिक्ता तिथिमा यात्रा शुभ हुँदैन । अश्विनी, पुनर्वसु, अनुराधा, मृगशिरा, पुष्य, रेवती, हस्ता, श्रवण र धनिष्ठामा गरिने यात्रा शुभदायक हुन्छ ।

### यात्रामा दिशा अनुसार निषिद्ध मुहूर्त्त



**न पूर्वादिशि शक्रभे न विधुसौरिवारे तथा**
**न चाजपदभे गुरौ यमदिशीनदैत्येज्ययोः ।**
**न पाशिदिशि धातृभे कुजबुधेऽर्यमर्क्षे तथा**
**न सौम्यककुभि व्रजेत् स्वजयजीवितार्थी बुधः ॥१०॥**

भावार्थः- धन, विजय र जीवन चाहने मनुष्यले ज्येष्ठा नक्षात्रमा र सोमबार-शनिबार पूर्वमा; पूर्वभाद्रपदा नक्षात्र र बिहीबार दक्षिणमा; रोहिणी नक्षात्र र आइतबार-शुक्रबार पश्चिममा तथा उत्तराफाल्गुनी नक्षात्र र मङ्गलबार-बुधबार उत्तर दिशामा यात्रा नगर्नू ।

यात्रा नक्षत्र र समय

पूर्वाह्णे ध्रुवमिश्रभैर्न नृपतेर्यात्रा न मध्याह्नके
तीक्ष्णाख्यैरपराह्णके न लघुभैर्नो पूर्वरात्रे तथा ।
मिश्राख्यैर्न च मध्यरात्रिसमये चोग्रैस्तथा नो चरै
रात्र्यन्ते हरिहस्तपुष्यशशिभिः स्यात् सर्वकाले शुभा ॥११॥

भावार्थः- ३ उत्तरा-रोहिणी-विशाखा-कृत्तिकामा पूर्वाह्नमा; मूल-ज्येष्ठा-आर्द्रा-अश्लेषामा मध्याह्नमा तथा हस्ता-अश्विनी-पुष्य- अभिजितमा अपराह्नमा यात्रा नगर्नू । मृगशिरा-रेवती-चित्रा-अनुराधामा रातको पहिलो प्रहरमा; ३ पूर्वा-भरणी-मघामा आधारातमा तथा स्वाती-पुनर्वसु-श्रवण-धनिष्ठा-शतभिषामा रातको अन्तिम प्रहरमा यात्रा गर्नु शुभ हुँदैन ।



यात्रा नक्षत्र र त्याज्य घडी

पूर्वाग्निपित्र्यान्तकतारकाणां भूपप्रकृत्युग्रतुरङ्गमाः स्युः ।
स्वातीविशाखेन्द्रभुजङ्गमानां नाड्यो निषिद्धा मनुसम्मिताश्च ॥१२॥

भावार्थः- तीनै पूर्वाको शुरुका १६ घडी, कृत्तिकाको शुरुका २१ घडी, मघाको शुरुका ११ घडी, भरणीको शुरुका ७ घडी, स्वाती-विशाखा-ज्येष्ठा-अश्लेषाको शुरुका १४ घडी यात्रामा निषिद्ध छ । बाँकी घडी शुभ हुन्छ ।

पूर्वार्द्धमाग्नेयमघानिलानां त्यजेद्धि चिह्नाहियमोत्तरार्द्धम् ।
नृपः समस्तां गमने जयार्थी स्वातीं मघां चोशनसो मतेन ॥१३॥

भावार्थः- विजय चाहने राजा वा रङ्कले कृत्तिका-मघा-स्वाती नक्षात्रको पूर्वार्द्ध तथा चित्रा-अश्लेषा-भरणीको उत्तरार्द्ध छोडदिनु अर्थात त्यसमा यात्रा नगर्नू । शुक्राचार्य स्वाती-मघा नक्षत्रको सबै भाग छोड्नु भन्दछन् ।

**राहु र यात्रा**

**तमोभुक्ततारा: स्मृता विश्वसङ्ख्याः शुभो जीवपक्षो मृतश्चापि भोग्याः ।**
**तदाक्रान्तभं कर्तरीसंज्ञमुक्तं ततोऽक्षेन्दुसङ्ख्यं भवेद् ग्रस्तनाम ॥१४॥**

भावार्थः- राहुले भोगेका १३ नक्षत्रलाई जीवपक्ष भनिन्छ । यी नक्षत्रमा यात्रा शुभ हुँदैन । राहुले भोग्य १३ नक्षत्रलाई मृतपक्ष भनिन्छ । यी नक्षत्रमा यात्रा शुभ हुन्छ । राहु जुन नक्षत्रमा हुन्छ त्यसलाई कर्तरी भनिन्छ तथा राहुबाट १५ औं नक्षत्रलाई ग्रस्त नक्षत्र भनिन्छ ।



मानिलिउँ राहु पुष्यमा छ-

जीवपक्ष (शुभ नक्षत्र) :- अश्लेषा-मघा-पू.फा.-उ.फा.-हस्ता-चित्रा- स्वाती-विशाखा-अनुराधा-ज्येष्ठा-मूल-पू.षा-उ.षा.

ग्रस्त नक्षत्र (अशुभ) :- अभिजित

मृतपक्ष (अशुभ नक्षत्र):- श्रवण-धनिष्ठा-शतभिषा-पू.भा.-उ.भा.-रेवती-अश्विनी-भरणी-कृत्तिका-रोहिणी-मृगशिरा-आर्द्रा-पुनर्वसु

### चन्द्रसूर्य र यात्रा

मार्त्तण्डे मृतपक्षगे हिमकरश्चज्जीवपक्षे शुभा
यात्रा स्याद्विपरीतगे क्षयकरी द्वौ जीवपक्षे शुभा ।
ग्रस्तर्क्षं मृतपक्षतः शुभकरं ग्रस्तात्तथा कर्तरी
यायीन्दुः स्थितिमान् रविर्जयकरौ तौ द्वौ तयोर्जीवगौ ॥१५॥

भावार्थः- सूर्य मृतपक्ष र चन्द्र जीवपक्षमा भए यात्रा शुभ यसको विपरित भए अशुभ हुन्छ । दुवै जीवपक्षमा भए यात्रा शुभ र दुवै मृतपक्षमा भए विनाशकारी हुन्छ । मृतपक्षले ग्रस्त नक्षत्र र ग्रस्तबाट कर्तरी नक्षत्र शुभ हुन्छ । आक्रमण गर्ने राजा वा मुद्दाका स्वामी चन्द्र; आक्रमण गरिने राजा तथा प्रतिवादीको स्वामी सूर्य हुन्छन् । यदि चन्द्रसूर्य दुवै जीवपक्षमा भए आक्रमण गर्ने र मुद्दा हाल्नेले जित्दछन् । चन्द्रमा जीवपक्षमा भए मुद्दा हाल्नेले जित्दछ र आक्रमण गर्नेले हार्दछ । यदि सूर्य जीवपक्षमा भए स्थायी हार्दछ । सूर्यचन्द्र दुवै मृतपक्षमा भए दुवैको हार हुन्छ अर्थात लड्दालड्दै नाशिन्छन् ।



### युद्धयात्रामा लाभदायक कुलाकुलसंज्ञक तिथि, बार र नक्षत्र

स्वात्यन्तकाहिवसुपौष्णकरानुराधा-
दित्यध्रुवाणि विषमास्तिथयोऽकुलाः स्युः ।
सूर्येन्दुमन्दगुरवश्च कुलाकुलाज्ञो
मूलाम्बुपेशविधिभं दशषड्विद्वतिथ्यः ॥१६॥
पूर्वाश्वीज्यमघेन्दुकर्णदहनद्वीशेन्द्रचित्रास्तथा
शुक्रारौ कुलसंज्ञकाश्च तिथयोऽर्काष्टिन्द्रवेदैर्मिताः ।

यायी स्यादकुले जयी च समरे स्थायी च तद्वत्कुले
सन्धिः स्यादुभयोः कुलाकुलगणे भूमीशयोर्युध्यतोः ॥१७॥

भावार्थः- स्वाती, भरणी, अश्लेषा, धनिष्ठा, रेवती, हस्ता, अनुराधा, पुनर्वसु, रोहिणी र तीन उत्तरा : यी बाह्र नक्षत्र; परेवा, तृतीया, पञ्चमी, सप्तमी, नवमी, एकादशी, त्रयोदशी, पूर्णिमा र औंसी : यी तिथि र आइतबार, सोमबार, शनिबार र बिहीबार : यी बार अकुलसंज्ञक हुन् । बुधबार तथा मूत्र, शतभिषा, आर्द्रा र अभिजित् : यी चार नक्षत्र अनि दशमी, षष्ठी, द्वितीया : यी तिथि यिनलाई कुलाकुल संज्ञक भनिन्छ । तीन पूर्वा, अश्विनी, पुष्य, मघा, मृगशिरा, श्रवण, कृत्तिका, विशाखा, ज्येष्ठा र चित्रा : यी बाह्र नक्षत्र; शुक्र र मङ्गलबार तथा द्वादशी, अष्टमी, चतुर्दशी र चतुर्थी तिथि : यिनलाई कुलसंज्ञक भनिन्छ । अकुलसंज्ञकमा युद्ध शुरु गर्ने यायी (घुमक्कड ?) राजा र कुलसंज्ञकमा युद्ध शुरु गर्ने स्थायी राजा विजयी हुन्छ । कुलाकुलसंज्ञकमा युद्ध शुरु गर्ने यायी स्थायी दुवै राजाका बीचमा सन्धि हुन्छ ।



चन्द्रसूर्य र यात्रा

स्युर्धर्मे दस्रपुष्योरगवसुजलपद्वीशमैत्राण्यथार्थे
याम्याजाङ्घ्रीन्द्रकर्णादितिपितृपवनोडून्यथो भानि कामे ।
वह्न्यार्द्राबुध्न्यचित्रानिर्ऋतिविधिभख्यानि मोक्षेथरोहि-
ण्यार्यम्णाप्येन्दुविश्वान्तिमभदिनकरर्क्षाणि पथ्यादिराहौ ॥१८॥

भावार्थः- पथिराहु चक्रमा धर्म, अर्थ, काम, मोक्ष-यी ४ मार्ग बताइएको छ । यी मार्गमा ७-७ नक्षत्र हुन्छन् । अश्विनी-पुष्य-अश्लेषा-धनिष्ठा-शतभिषा-विशाखा र अनुराधा यी ७ नक्षत्र धर्ममार्गका हुन् । भरणी-पू.भा.- ज्येष्ठा-श्रवण-पुनर्वसु-

मघा र स्वाती अर्थमार्गका हुन् । कृत्तिका-आर्द्रा-उ.भा.-चित्रा-मूल-अभिजित् र पू.फा. : यी ७ नक्षत्र काममार्गका हुन् । रोहिणी-पू.षा.-मृगशिरा-रेवती-उ.षा.-उ.फा. : यी ७ नक्षत्र मोक्षमार्गका हुन् ।

**धर्मगे भास्करे वित्तमोक्षे शशी वित्तगे धर्ममोक्षस्थितिः शस्यते ।**
**कामगे धर्ममोक्षर्थगः शोभनो मोक्षगे केवलं धर्मगः प्रोच्यते ॥१९॥**

भावार्थः- धर्ममार्गमा सूर्य, अर्थ वा मोक्षमार्गमा चन्द्रमा भए वा अर्थमार्गमा सूर्य र धर्म वा मोक्षमार्गमा चन्द्रमा भए वा काममार्गमा सूर्य र धर्म-अर्थ-मोक्ष मार्गमा चन्द्रमा भए वा मोक्षमार्गमा सूर्य र धर्ममार्गमा चन्द्रमा भए यात्रा उत्तम हुन्छ । यसको उल्टो भए यात्रीको हानी हुन्छ ।

| धर्ममार्गका नक्षत्र | अश्विनी | पुष्य | अश्लेषा | विशाखा | अनुराधा | धनिष्ठा | शतभिषा |
|---|---|---|---|---|---|---|---|
| अर्थमार्गका नक्षत्र | भरणी | पुनर्वसु | मघा | स्वाती | ज्येष्ठा | श्रवण | पू.भा. |
| काममार्गका नक्षत्र | पुनर्वसु | आर्द्रा | पू.फा. | चित्रा | मूल | अभिजित | उ.भा. |
| मोक्षमार्गका नक्षत्र | रोहिणी | मृगशिरा | उ.फा | हस्ता | पू.षा. | उ.षा. | रेवती |



**महिना अनुसार यात्रामा बार्नुपर्ने तिथिहरु**

**पौषे पक्षत्यादिका द्वादशैवं तिथ्यो माघादौ द्वितीयादिकास्ताः ।**
**कामात्तिस्रः स्युस्तृतीयादिवच्च याने प्राच्यादौ फलं तत्र वक्ष्ये ॥२०॥**
**सौख्यं क्लेशो भीतिरर्थागमश्च शून्यं नैःस्वं सिःस्वता मिश्रता च ।**
**द्रव्यक्लेशो दुःखमिष्टाप्तिरर्थो लाभः सौख्यं मङ्गलं वित्तलाभः ॥२१॥**
**लाभो द्रव्याप्तिर्धनं सौख्यमुक्तं भीतिर्लाभो मृत्युरर्थागमश्च ।**
**लाभः कष्टद्रव्यलाभौ सुखं च कष्टं सौख्यं क्लेशलाभौ सुखं च ॥२२॥**

**सौख्यं लाभः कार्यसिद्धिश्च कष्टं क्लेशः कष्टात्सिद्धिरर्थो धनं च ।**
**मृत्युर्लाभो द्रव्यलाभश्च शून्यं शून्यं सौख्यं मृत्युरत्यन्तकष्टम् ॥२३॥**

भावार्थः- पुसमा परेवादेखिका १२ तिथि, माघमा द्वितीयादेखिका १२, फागुनमा तृतीया देखिका १२, चैत्रमा चतुर्थी देखिका १२, वैशाखमा पञ्चमी देखिका १२, जेठमा षष्ठी देखिका १२, असारमा सप्तमी देखिका १२, साउनमा अष्टमी देखिका १२, भदौमा नवमी देखिका १२, असौजमा दशमी देखिका १२, कात्तिकमा एकादशी देखिका १२ र मंसिरमा द्वादशी देखिका १२ तिथि तथा सबै महिनामा त्रयोदशी, चतुर्दशी र पूर्णिमालाई तृतीया, चतुर्थी र पञ्चमी समान सम्झी क्रमैले पूर्वादि दिशामा सौख्य, क्लेश, भीति, धनप्राप्ति, शून्य, निस्व, निस्व, मित्रता, वनक्लेश, दुःख, इष्टाप्ति, धन, लाभ, सौख्य, मङ्गल, धनाप्ति, लाभ, धनाप्ति, धन, सौख्य, भय, लाभ, मृत्यु, धनाप्ति, लाभ, कष्ट, धनाप्ति, सुख, कष्ट, सौख्य, क्लेशलाभ, सुख, सौख्य, लाभ, कार्यसिद्धि, कष्ट, क्लेश, कष्टसिद्धि, धनाप्ति, धन, मृत्यु, लाभ, धनलाभ, शून्य, शून्य, सौख्य, मृत्यु र कष्ट फल दिन्छन् ।



| पुष | माघ | फा. | चैत्र | बैशा. | जेठ | असा. | श्राव. | भाद्र | असौ. | कार्ति. | मार्ग | पूर्व | दक्षिण | पश्चिम | उत्तर |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | सौख्य | क्लेश | भीति | धनाप्ति |
| २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | शून्य | निस्व | निस्व | मित्रता |
| ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | वनक्लेश | दुःख | इष्ढाप्ति | धन |
| ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | लाभ | सौख्य | मङ्गल | धनाप्ति |
| ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | लाभ | धनाप्ति | धन | सौख्य |
| ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | भय | लाभ | मृत्यु | धनाप्ति |
| ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | लाभ | कष्ट | धनाप्ति | सुख |
| ८ | ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | कष्ट | सौख्य | क्लेशलाभ | सुख |
| ९ | १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | सौख्य | लाभ | कार्यसिद्धि | कष्ट |
| १० | ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | क्लेश | कष्टसिद्धि | धनाप्ति | धन |
| ११ | १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | मृत्यु | लाभ | धनलाभ | शून्य |
| १२ | १ | २ | ३,१३ | ४,१४ | ५,१५ | ६ | ७ | ८ | ९ | १० | ११ | शून्य | सौख्य | मृत्यु | कष्ट |

### तिथि, बार, नक्षत्र र यात्रा

**तिथ्यृक्षवारयुतिरद्रिगजाग्नितष्टा**
**स्थानत्रयेऽत्र वियति प्रथमेऽतिदुःखी ।**
**मध्ये धनक्षतिरथो चरमे मृतिः स्यात्**
**स्थानत्रयेऽङ्कयुजि सौख्यजयौ निरुक्तौ ॥२४॥**

भावार्थः- जुन बेला यात्राको दिन निश्चित गर्नु छ ,त्यस दिन अहिले जुन तिथि-बार-नक्षत्र छन् त्यसको संख्याको जोडलाई ३ ठाउँमा राख्नु । पहिलो ठाउँमा राखेकोलाई ७ ले भाग गरी शून्य शेष रहे यात्रामा यात्रीलाई दुःख हुन्छ । दोश्रो ठाउँकोलाई ८ ले भाग गर्दा शून्य शेष रहे यात्रीलाई धनको नोक्सान हुन्छ । तेश्रो ठाउँकोलाई ३ ले भागगर्दा शून्य शेष रहे यात्रीको मृत्यु हुन्छ । यदि तीनै ठाउँमा कुनै अङ्क शेष आए यात्रीलाई सुख, प्रसन्नता र विजयको प्राप्ति हुन्छ ।



### महाडल योग र यात्रा

**रवेर्भतोऽब्जभोन्मितिर्नगाावशेषिता द्व्यगा ।**
**महाडलो न शस्यते त्रिषण्मिता भ्रमो भवेत् ॥२५॥**

भावार्थः- सूर्य जुन नक्षत्रमा रहन्छ त्यसलाई सूर्यको नक्षत्र भनिन्छ । सूर्यको नक्षत्रबाट चन्द्रमाको नक्षत्रसम्म गन्दा आएको संख्यालाई ७ ले भाग गर्दा २ वा ७ शेष रहन आए त्यो महाडल योग हुन्छ । यसमा यात्रा शुभ हुँदैन । ३ वा ६ शेष रहे भ्रम योग हुन्छ र यो पनि शुभ हुन्न ।

### हिंवर योग र यात्रा

**शशाङ्कभं सूर्यभतोऽत्र गण्यं पक्षादितिथ्या दिनवासरेण ।**
**युतं नवाप्तं नागशेषकं चेत् स्याद्धिंवरं तद् गमनेऽतिशस्तम् ॥२६॥**

भावार्थः- सूर्यको नक्षत्रबाट चन्द्रमाको नक्षत्रसम्म गन्दा आएको संख्यामा पक्षादिबाट वर्तमान तिथिको संख्या र आइतबारबाट अहिलेको बारसम्मको संख्या जोडी ९ ले भागगर्दा ७ शेष रहन गए हिंवर नामको योग हुन्छ । यो योग यात्रामा अत्यन्त राम्रो हुन्छ ।

### घात चन्द्रमाको बारना



**भूपञ्चाङ्कद्वयङ्गदिग्वह्निसप्तवेदाष्टेशार्काश्च घाताख्यचन्द्रः ।**
**मेषादीनां राजसेवाविवादे वर्ज्यौ युद्धाद्ये च नान्यत्र वर्ज्यः ॥२७॥**

भावार्थः- मेष आदि राशि हुनेहरुका लागि क्रमशः प्रथम (मेषका), पञ्चम (कन्याका), नवम (कुम्भका), दोश्रो (सिंहका), छैटौं (मकरका), दशौं (मिथुनका), तेश्रो ( धनका), सातौं (वृषका), चौथो (मीनका), आठौं (सिंहका), एघारौं (धनुका) र बाह्रौं (कुम्भका) चन्द्रमा घात हुन्छ । यस्तो पर्दा राजसेवा र मुद्दामामिलामा बार्नू । अन्यत्र बार्न पर्दैन ।

### यात्रा नक्षत्र र त्याज्य चरण

**आग्नेयत्वाष्ट्रजलपपित्र्यवासवरौद्रभे ।**

**मूलब्राह्माजपादर्क्षे पित्र्यमूलाजभे क्रमात् ।।२८।।**
**रूपद्व्यग्न्यग्निभूरामद्व्यब्ध्यग्न्यब्धियुगाग्नयः ।**
**घातचन्द्रे धिष्ण्यपादा मेषाद् वर्ज्या मनीषिभिः ।।२९।।**

भावार्थः- मेष आदि राशि हुनेहरुलाई क्रमैले कृत्तिकाको पहिलो चरण, चित्राको दोश्रो, शतभिषाको तेश्रो, मघाको तेश्रो, धनिष्ठाको पहिलो, आर्द्राको तेश्रो, मूलको दोश्रो, रोहिणीको चौथो, पूर्वाषाढाको तेश्रो, मघाको चौथो, मूलको चौथो र पूर्व भाद्रपदाको तेश्रो चरण चरणघात हुन्छ । यसमा यात्रा त्याज्य हुन्छ भनी मुनिहरु भन्दछन् ।

राशि अनुसार यात्रामा बार्नुपर्ने तिथिहरु

**गोस्त्रीझषे घाततिथिस्तु पूर्णा भद्रा नृयुक्कर्कटकेऽथ नन्दा ।**
**कौर्प्याजयोर्नक्रघटे च रिक्ता जया धनुःकुम्भहरौ न शस्ताः ।।३०।।**

भावार्थः- वृष-कन्या-मीन राशि हुनेका लागि ५।१०।१५ तिथि, मिथुन-कर्कट राशि हुनेका लागि २।७।१२ तिथि, वृश्चिक-मेष राशि हुनेका लागि १।६।११ तिथि, मकर-तुला राशि हुनेका लागि ४।९।१४ तिथि तथा धनु-कुम्भ-सिंह राशि हुनेका लागि ३।८।१३ तिथि घात तिथि हुन्छन् । घाततिथिमा यात्रा उत्तम हुँदैन ।

घातबार र यात्रा

**नक्रे भौमो गोहरिस्त्रीषु मन्दश्चन्द्रो द्वन्द्वेऽर्कोऽजभे ज्ञश्च कर्के ।**
**शुक्रःकोदण्डालिमस्त्रेषु कुम्भजूके जीवो घातवारा न शस्ताः ।।३१।।**

भावार्थः- मकर राशि हुनेका लागि मङ्गलबार, वृष-सिँह-कन्या राशि हुनेका लागि शनिबार, मिथुन राशि हुनेका लागि सोमबार, मेष राशि हुनेका लागि आइतबार, कर्कट राशि हुनेका लागि बुधबार, धनु-वृश्चिक-मीन राशि हुनेका लागि शुक्रबार तथा तुला-कुम्भ राशि हुनेका लागि बिहीबार घात बार हुन्छन् । घातबारमा यात्रा शुभ हुँदैन ।

### राशि र यात्रा

**मघाकरस्वातिमैत्रमूलश्रुत्यम्बुपान्त्यभम् ।**
**याम्यब्राह्मेशसापञ्च मेषादेर्घातभं न सत् ॥३२॥**



भावार्थः- मेष आदि राशि हुनेका लागि क्रमैले मघा, हस्ता, स्वाती, अनुराधा, मूल, श्रवण, शतभिषा, रेवती, भरणी, रोहिणी, आर्द्रा र अश्लेषा नक्षत्र घातनक्षत्र हुन्छन् । यिनमा यात्रा नगर्नू ।

### घातलग्न र यात्रा

**भूमिद्व्यब्ध्यद्रिदिक्सूर्याङ्गाष्टाङ्केशाग्निसायकाः ।**
**मेषादिघातलग्नानि यात्रायां वर्जयेत् सुधीः ॥३३॥**

भावार्थः- मेष आदि राशि हुनेका लागि क्रमैले मेष, मिथुन, कुम्भ, मकर, मेष, सिंह, मीन, मिथुन, सिंह, वृश्चिक, मेष कर्कट लग्न घातलग्न हुन्छन् । यिनमा यात्रा नगर्नू ।

| बार्नुपर्ने कुरा | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| घातलग्न १ | १ मे. | २ मि. | ४ कुं. | ७ मक. | १० मे. | १२ सिं. | ६ मीन | ८ मिथुन | ९ सिंह | ११ वृश्चि. | ३ मेष | ५ कर्कट |
| घातलग्न २ | मेष | वृष | कर्कट | तुला | मकर | मीन | कन्या | वृश्चिक | धनु | कुम्भ | मिथुन | सिंह |
| घातचन्द्र | मेष | कन्या | कुम्भ | सिंह | मकर | मिथुन | धनु | वृष | मीन | सिंह | धनु | कुम्भ |
| घातनक्षत्रको चरण | कृ.१ | चि.२ | शत.३ | मघा ३ | धनि.१ | आर्द्रा ३ | मूल २ | रोहि.४ | पू.भा.३ | मघा ४ | मूल ४ | पू.भा.३ |
| घाततिथि | १,६,११ | ५,१०,१५ | २,७,१२ | २,७,१२ | ३,८,१३ | ५,१०,१५ | ४,९,१४ | १,६,११ | ३,८,१३ | ४,९,१४ | ३,८,१३ | ५,१०,१५ |
| घातबार | आइत | शनि | सोम | बुध | शनि | शनि | बिही | शुक्र | शुक्र | मङ्गल | बिही | शुक्र |
| घातनक्षत्र | मघा | हस्ता | स्वाती | अनुराधा | मूल | श्रवण | शतभिषा | रेवती | भरणी | रोहिणी | आर्द्रा | अश्लेषा |
| घातमास | कात्तिक | मंसिर | पुष | माघ | फागुन | चैत | वैशाख | जेठ | असार | साउन | भदौ | असौज |

## यात्रामा योगिनी

**नवभूम्यः शिववह्नयोऽक्षविश्वेऽर्ककृताः शक्ररसास्तुरङ्गतिथ्यः ।**
**द्विदिशोमावसवश्च पूर्वतः स्युस्तिथयः सम्मुखवामगा न शस्ताः ॥३४॥**



भावार्थः- ९।१ तिथिको पूर्वमा, ११।३ तिथिको आग्नेयमा, ५।१३ तिथिको दक्षिणमा, १२।४ तिथिको नैऋत्यमा, १४।६ तिथिको पश्चिममा, ७।१५ तिथिको वायव्यमा, २।१० तिथिको उत्तरमा तथा ३०।८ तिथिको इशानमा योगिनीको वास हुन्छ । यात्रामा योगिनी सम्मुख वा बायाँ भए शुभ हुँदैन (दायाँ वा पछाडी भए शुभ) ।

## काल र पाशमा यात्रा

**कौबेरीतो वैपरीत्येन कालो वारेऽर्काद्ये सम्मुखे तस्य पाशः ।**
**रात्रावेतौ वैपरीत्येन गण्यौ यात्रायुद्धे सम्मुखे वर्जनीयौ ॥३५॥**

भावार्थः- आइतबार उत्तर, सोमबार वायव्य, मङ्गलबार पश्चिम, बुधवार नैऋत्य, बिहीबार दक्षिण, शुक्रबार आग्नेय तथा शनिबार पूर्वमा कालको वास हुन्छ । कालको ठीक अगिल्तिर पाशको वास हुन्छ । रातमा काल र पाश दिनको ठीक उल्टो वास गर्दछन् । यी दुवै यात्रा र युद्ध-यात्रामा सामुन्ने भए वर्जित हुन्छ ।

यात्राको दिशा (कालदण्ड रेखा)

**भानि स्थाप्यान्यब्धिदिक्षु सप्तसप्तानलर्क्षतः ।**
**वायव्याग्नेयदिक्संस्थं पारिघं नैव लङ्घयेत् ॥३६॥**

भावार्थः- कृत्तिका नक्षत्रबाट शुरु गरी ७, ७ नक्षत्र पूर्वबाट चारै दिशामा स्थापना गर्नू । यसमा वायव्यबाट आग्नेयसम्म खिचिने रेखालाई कालदण्ड भनिन्छ । यात्रामा कालदण्ड नाघ्न हुँदैन । 

**अग्नेर्दिशं नृप इयात्पुरुहूतदिग्भैरवं**
**प्रदक्षिणगता विदिशोऽथ कृत्ये ।**
**आवश्यकेऽपि परिघं प्रविलंघ्य गच्छे-**
**च्छूलं विहाय यदि दिक्तनुशुद्धिरस्ति ॥३७॥**

भावार्थः- राजाले आग्नेयको यात्रा पूर्वका नक्षात्रमा, नैर्ऋत्यको यात्रा दक्षिणका नक्षात्रमा, वायव्यको यात्रा पश्चिमका नक्षात्रमा र ईशानको यात्रा उत्तरको नक्षात्रमा गर्नु पर्दछ । आवश्यक कार्य भए शूललाई छाडी यदि दिग्द्वार लग्न शुद्ध भए परिघदण्ड नाघी यात्रा गर्न सकिन्छ ।

पूर्व

| | | |
|---|---|---|
| | कृ.रो.मृ.आर्द्रा पुन.पुष्य आश्लेषा | |
| उत्तर ध.श.पू.भा.उ.भा.रे.अश्वि.भर. | कालदण्ड | म.पू.फा.उ.फा.हस्ता चि.स्वा.वि. |
| | श्रवण अभि.उ.षा.पू.षा.मू.ज्ये.अनु. | |

### यात्रामा शुभ नक्षत्र

**मैत्रार्कपुष्याश्विनभैर्निरुक्ता यात्रा शुभा सर्वदिशासु तज्ज्ञैः ।**

भावार्थः- अनुराधा, हस्ता, पुष्य, अश्विनी : यी चार नक्षात्रमा पण्डितहरु यात्रा उत्तम भनी बताउँदछन् ।



### बक्री ग्रह र यात्रा

**वक्री ग्रहः केन्द्रगतोऽस्य वर्गो लग्ने दिनं चास्य गमेर्निषिद्धम् ॥३८॥**

भावार्थः- कुनै बक्री ग्रह वा कुनै बक्री ग्रहको वर्ग यात्रा-लग्नमा भए यात्रा निषिद्ध हुन्छ । बक्रीग्रहको बार पनि यात्राको लागि निषिद्ध छ

### चन्द्रसूर्य र यात्रा

**सौम्यायने सूर्यविधू तदोत्तरां प्राचीं व्रजेत् तौ यदि दक्षिणायने ।**
**प्रत्यग्यमाशां च तयार्दिवानिशं भिन्नायनत्वेऽथ वधोऽन्यथा भवेत् ॥३९॥**

भावार्थः- सूर्यचन्द्र दुवै उत्तरायणमा भए उत्तर र पूर्व दिशामा तथा दुवै दक्षिणायनमा भए दक्षिण र पश्चिम दिशामा यात्रा गर्नू । दुवैको अयन फरकफरक भए सूर्यको अयनको दिशातिर दिनमा र चन्द्रको अयनको दिशातिर रातमा यात्रा गर्नू । यसको विपरित गरी रात र दिनमा यात्रा गर्दा यात्रीको हत्या हुन्छ ।

### शुक्र ग्रह र यात्रा

**उदेति यस्यां दिशि यत्र याति गोलभ्रमाद्वाथ ककुब्भसङ्घे ।**
**त्रिधोच्यते सम्मुख एव शुक्रो यत्रोदितस्तां तु दिशं न यायात् ॥४०॥**

भावार्थः- शुक्र जुन दिशामा उदाएको छ वा गोलभ्रमणवंश उत्तर वा दक्षिण दिशामा भए वा कृत्तिका देखि मघासम्मका नक्षत्र पूर्वका, मघा देखि विशाखासम्मका नक्षत्र दक्षिणका, अनुराधा देखि श्रवणसम्मका नक्षत्र पश्चिमका र धनिष्ठादेखि भरणीसम्मका नक्षत्र उत्तरका दिग्नक्षत्र भनिन्छन् । यी नक्षत्रमा परिस्थितिवश जुन दिशामा छ त्यही अनुसार ३ किसिमका शुक्र हुन्छ । जुन दिशामा शुक्र छ त्यस दिशामा यात्रा नगर्नू ।



### राजाको यात्रा

**वक्रास्तनीचोपगते भृगोः सुते राजा व्रजन्याति वशं हि विद्विषाम् ।**
**बुधोऽनुकूलो यदि तत्र संचलन् रिपूञ्जयेन्नैव जयः प्रतीन्दुजे ॥४१॥**

भावार्थ :- बक्री वा नीचस्थानमा शुक्र हुँदा यात्रा गर्ने राजा शत्रूका अधिनमा पुग्दछ । शुक्र बक्री भएपनि बुध अनुकूल वा पछि छ भने त्यसबेला यात्रा गर्ने राजाले शत्रुलाई अवश्य परास्त गर्दछ । तर बुध सामुन्ने भए जित हुँदैन ।

### शुक्रदोषमा थप

**यावच्चन्द्रः पूषभात्कृत्तिकाद्ये पादे शुकोऽन्धो न दुष्टोऽग्रदक्षे ।**
**मध्ये मार्गे भार्गवास्तेऽपि राजा तावत्तिष्ठेत्संमुखत्वेऽपि तस्य ॥४२॥**

भावार्थः- रेवतिदेखि कृत्तिका नक्षत्रको पहिलो चरणसम्म चन्द्रमा रहँदासम्म शुक्र अन्धो हुन्छ । यसैले यसबेला शुक्र सामुन्ने भएको वा दाहिने भएकोमा कुनै दोष हुँदैन । यदि मार्गमै शुक्र अस्त भए जबसम्म उदय हुँदैन तबसम्म राजा त्यहीँ बस्नू । उदाउँदा सामुन्ने भएपनि जबसम्म पछाडि र देब्रे हुँदैन तबसम्म त्यहीँ बस्नू, अघि नबढ्नू ।



### त्याज्य लग्न विशेष

**कुम्भकुम्भांशकौ त्याज्यौ सर्वथा यत्नतो बुधैः ।**
**तत्र प्रयातुर्नृपतेरर्थनाशः पदे पदे ॥४३॥**

भावार्थः- यात्राका कुनै पनि शुभ लग्नमा कुम्भको नवांश विद्वानले सधैं त्याग्नू । त्यसमा यात्रा गर्ने यात्रीको पाइलापाइलामा धन नाश हुन्छ ।

### मीन, मीनको नवांशको फल र शुभलग्न

**अथ मीनलग्न उत वा तदंशके चलितस्य वक्रमिह वर्त्म जायते ।**
**जनिलग्नजन्मभपति शुभग्रहौ भवतस्तदा तदुदये शुभो गमः ॥४४॥**

भावार्थः- मीनलग्न वा कुनै पनि लग्नको मीन नवांशमा यात्रा गर्नेको बाटो टेढो हुन्छ । यात्रीको जन्मलग्न र जन्मराशिको मालिक दुवै शुभग्रह भएमा र लग्नमा बसेको बेलामा वा तिनको लग्नमा यात्रा शुभ हुन्छ ।

### अरु अनिष्ट लग्न

**जन्मराशितनुतोऽष्टमेऽथवा स्वारिभाच्च रिपुभे तनुस्थिते ।**
**लग्नगास्तदधिपा यदाऽथवा स्युर्गतं हि नृपतेर्मृतिप्रदम् ॥४५॥**

भावार्थः- आफ्नो जन्मराशि वा जन्मलग्नबाट आठौं र आफ्नो शत्रुको जन्मराशि वा जन्मलग्नबाट छैटौं राशि यदि यात्रालग्नमा छ भने अथवा तिनको स्वामी यात्रालग्नमा बसेको भए त यात्रीको मृत्यु हुन्छ ।

### चन्द्रमा र यात्रा

**लग्ने चन्द्रे वापि वर्गोत्तमस्थे यात्रा प्रोक्ता वाञ्छितार्थैकदात्री ।**
**अम्भोराशौ वा तदंशे प्रशस्तं नौकायानं सर्वसिद्धिप्रदायि ॥४६॥**

भावार्थः- यात्राको समयमा चन्द्रमा लग्नमा वा आफ्नो नवांशमा रहेको छ भने यात्रा सोचेजस्तै फल दिने हुन्छ । यदि लग्नमा जलचर (कर्कट,मीन,मकर) राशि वा जलचर राशिको नवांश भए डुङ्गाद्वारा गरिने यात्रा सफलता दायक हुन्छ ।

### दिशा र यात्रा

द्विग्द्वारभे लग्नगते प्रशस्ता यात्राऽर्थदात्री जयकारिणी च ।
हानिं विनाशं रिपुतो भयं च कुर्यात् तथा दिक्प्रतिलोमलग्ने ॥४७॥

भावार्थः- पूर्व आदि दिशामा मेष आदि राशि दिग्द्वार राशि हुन् । पूर्वमा १।५।६, दक्षिणमा २।६।१०, पश्चिममा ३।७।११ र उत्तरमा ४।८।१२ दिग्द्वार राशि हुन् । यिनको लग्नमा गरिने यात्रा धन र जय प्रदायक हुन्छ । दिशाको विपरीत लग्नमा गरिने यात्रा हानिकारक, विनाशक र शत्रुबाट डर पैदा गराउने हुन्छ ।



### अन्य यात्राको शुभ साइत

राशिः स्वजन्मसमये शुभसंयुतो यो
यः स्वारिभान्निधनगोऽपि च वेशिसञ्ज्ञ
लग्नोपगः स गमने जयदोऽथ भूप-
योगैर्गमो विजयदो मुनिभिः प्रदिष्टः ॥४८॥

भावार्थः- आफ्नो जन्मसमयमा शुभग्रहले युक्त राशि, शत्रुको जन्मराशि जन्मलग्नबाट आठौं स्थानको राशि वा सूर्यबाट दोश्रो राशि : यी ३ मध्ये कुनै राशि

यात्रालग्नमा परे यात्रा विजयदायक हुन्छ । जातकग्रन्थको राजयोगको यात्रा पनि विजयदायक हुन्छ भनी मुनिले भनेका छन् ।

### दिशाका मालिक

**सूर्यः सितो भूमिसुतोऽथ राहुः शनिः शशी ज्ञश्च बृहस्पतिश्च ।**
**प्राच्यादितो दिक्षु विदिक्षु चापि दिशामधीशाः क्रमतः प्रदिष्टाः ॥४९॥**

भावार्थः- सूर्य, शुक्र, मङ्गल, राहु, शनि, चन्द्रमा, बुध र बृहस्पति यी क्रमैले पूर्व आदि दिशा र उपदिशाका स्वामी हुन् भनी बताइएको छ ।

### राजाको युद्ध-यात्रा



**केन्द्रे दिगधीशे गच्छेदवनीशः ।**
**लालाटिनि तस्मिन्नेयादरिसेनाम् ॥५०॥**

भावार्थः- जुन दिशातिर यात्रा गर्ने हो त्यो दिशाका स्वामी केन्द्रमा भएका बेलामा राजाले यात्रा गर्नू । यदि दिशाका स्वामी लालाट योगकारी छन् भने त राजाले शत्रूका सेनामाथि आक्रमण नगर्नू ।

### ललाट योग र यात्रा

**प्राच्यादौ तरणिस्तनौ भृगुसुतो लाभव्यये भूसुतः**
**कर्मस्थोऽथ तमो नवाष्टमगृहे सौरिस्तथा सप्तमे ।**

**चन्द्रःशत्रुगृहात्मजेऽपि च बुधः पातालगो गीष्पति-**
**र्वित्तभ्रातृगृहे विलग्नसदनाल्लालाटिकाः कीर्तिताः ॥५१॥**

भावार्थः- यात्रालग्नमा सूर्य भए पूर्वको, यात्रालग्नबाट ११।१२ को शुक्र आग्नेयको, १० को मङ्गल दक्षिण, ८।९ को राहु नैऋत्यको, ७ को शनि पश्चिमको, ५।६ को चन्द्रमा वायव्यको, ४ को बुध उत्तरको तथा २।३ को बृहस्पति ईशानको लालाटिक योग गर्दछ । यो योगमा यात्रा निषेध छ ।

यात्रामा बास

**मृगे गत्वा शिवे स्थित्वादृतौ गच्छन् जयेद्रिपून् ।**
**मैत्रे प्रस्थाय शाक्रे हि स्थित्वा मूले व्रजंस्तथा ॥५२॥**

**प्रस्थाय हस्तेऽनिलतक्षधिष्ण्ये स्थित्वा जयार्थी प्रवसेद्द्विदैवे ।**
**वस्वन्त्यपुष्ये निजसीम्नि चैकरात्रौषितः क्ष्मां लभतेऽवनीशः ॥५३॥**

भावार्थः- मृगशिरा नक्षत्रमा यात्रा शुरु गरी आर्द्रा नक्षत्रमा कसैका घरमा बास बसेर पुनर्वसु नक्षत्रमा त्यहाँबाट हिँड्नू । अथवा अनुराधा नक्षत्रमा घरबाट निस्की ज्येष्ठा नक्षत्रमा कतै बास बसेर मूल नक्षत्रमा त्यहाँबाट हिँड्नू र शत्रूलाई जित्नू । यसैगरी हस्ता नक्षत्रमा आफ्नो घरबाट यात्रामा निस्की चित्रा र स्वाती नक्षत्र हुँदासम्म कतै बास बसी विशाखा नक्षत्रमा त्यहाँबाट हिँड्नू । अथवा धनिष्ठा, रेवती वा पुष्य नक्षत्रमा आफ्नो घरबाट यात्रा शुरु गरी गाउँको सीमामा एक रात बास बसेर पुनः यात्रा शुरु गर्नू । यसरी यात्रा गर्दा राजाले शत्रूराज्य माथि जित हासिल गर्दछ ।

**यात्राको समय**

उषःकालो विना पूर्वां गोधूलिः पश्चिमां विना ।
विनोत्तरां निशीथः सन् याने याम्यां विनाऽभिजित् ॥५४॥

भावार्थः- उषाकालमा पूर्वलाई छोडी अरु दिशामा, गोधूलि समयमा पश्चिमलाई छोडी अरु दिशामा, आधारातमा उत्तर बाहेकका अरु दिशामा तथा अभिजित् मुहूर्तमा दक्षिण बाहेकका दिशामा यात्रा शुभ हुन्छ ।

**लग्नका भावहरू**



लग्नाद्भावाः क्रमाद्देहकोशधानुष्कवाहनम् ।
मन्त्रोऽरिर्मार्ग आयुश्च हृद्व्यापाराऽऽगमव्ययाः ॥५५॥

भावार्थः- लग्नमा क्रमैले देह, कोश, धानुष्क, वाहन, मन्त्र, अरि, मार्ग, आयु, हृदय, व्यापार र व्यय गरी १२ भाव हुन्छन् ।

**यात्रामा ग्रहको फल**

केन्द्रे कोणे सौम्यखेटाः शुभास्स्युर्याने पापास्त्र्यायषट्खेषु चन्द्रः ।
नेष्टो लग्नान्त्यारिरन्ध्रे शनिः खेऽस्ते शुक्रो लग्नेट् नगान्त्यारिरन्ध्रे ॥५६॥

भावार्थः- यात्रा लग्नबाट केन्द्र तथा त्रिकोणमा शुभग्रह र ३।६।१०।११ स्थानमा पापग्रह भए यात्रा फलदायी हुन्छ । त्यस्तै, १।१२।६।८ मा चन्द्रमा, १० मा शनि, ७ मा शुक्र तथा ७।१२।६।८ मा लग्नस्वामी हुनु यात्रामा शुभ हुँदैन ।

वर्ण अनुसार यात्राको साइत

**योगात् सिद्धिर्धरणिपतीनामृक्षगुर्णरपि भूदेवानाम् ।**
**चौराणामपि शुभशकुनैर्वा भवति मुहूर्तादपि मनुजानाम् ।।५७।।**

भावार्थः- क्षत्रीयको लग्नवशबाट, ब्राह्मणको चन्द्रताराबल सहितको वेधादिदोषरहित विहित नक्षत्रवशबाट, चोरको वक्ष्यमाण शुभ शकुनवशबाट र अरु सबैको शुभमुहूर्तवशबाट यात्रा उत्तम हुन्छ ।



राजाको युद्ध-यात्राका साइतहरू

**सहजे रविर्दशमे शशी तथा शनिमङ्गलौ रिपुगृहे सितः सुते ।**
**हिबुके बुधो गुरुरपीह लग्नगः स जयत्यरीन् प्रचलितोऽचिरान्नृपः ।।५८।।**

भावार्थः- लग्नबाट तेश्रो स्थानमा सूर्य, दशौं स्थानमा चन्द्रमा, छैटौं स्थानमा शनि र मङ्गल, पाँचौं स्थानमा शुक्र, चौथो स्थानमा बुध, लग्नमा बृहस्पति हुँदाको योगमा युद्धयात्रामा निस्किएको राजाले चाँडै शत्रूमाथि जित हासिल गर्दछ ।

**भ्रातरि सौरिर्भूमिसुतो वैरिणि लग्ने देवगुरुः ।**
**आयगतेऽर्के शत्रुजयश्चेदनुकूलो दैत्यगुरुः ।।५९।।**

भावार्थः- तेश्रो स्थानमा शनि, छैटौं स्थानमा मङ्गल, लग्नमा बृहस्पति, एघारौं स्थानमा सूर्य भई शुक्र पछाडि वा देब्रतिर हुँदाको योगमा युद्धयात्रामा निस्केका राजाको जित हुन्छ ।

**तनौ जीव इन्दुर्मृतौ वैरिगोऽर्कः । प्रयातो महीन्द्रो जयत्येव शत्रून्॥६०॥**

भावार्थः- लग्नमा बृहस्पति, आठौं स्थानमा चन्द्रमा, छैटौं स्थानमा सूर्य हुँदाको योगमा युद्धयात्रामा निस्कने राजाले अवश्य नै शत्रुलाई जित्दछ ।

**लग्नगतः स्याद्देवपुरोधाः । लाभधनस्थैः शेषननभोगैः॥६१॥**

भावार्थः- लग्नमा बृहस्पति, एघारौं र दोश्रो स्थानमा बाँकी सबै ग्रह हुँदाको योगमा युद्धयात्रामा निस्कने राजाले जित हासिल गर्दछ ।



**द्यूने चन्द्रे समुदयगेऽर्के जीवे शुक्रे विदि धनसंस्थे ।**
**ईदृग्योगे चलति नरेशो जेता शत्रून् गरुड इवाहीन्॥६२॥**

भावार्थः- सातौं स्थानमा चन्द्रमा, लग्नमा सूर्य तथा बृहस्पति तथा शुक्र र बुध अर्को स्थानमा हुँदाको योगमा युद्धयात्रामा निस्कने राजाले आफ्ना शत्रूलाई गरुडले सर्पलाई जितेझैं जित्दछ ।

**वित्तगतः शशिपुत्रो भ्रातरि वासरनाथः ।**
**लग्नगते भृगुपुत्रे स्युः शलभा इव सर्वे॥६३॥**

भावार्थः- दोश्रो स्थानमा बुध, तेश्रो स्थानमा सूर्य र लग्नमा शुक्र हुँदाको योगमा युद्धयात्रामा निस्कने राजाले अग्निले सलहलाई नाश गरेझैं शत्रुलाई नाश गर्दछ ।

**उदये रविर्यदि सौरिररिगः शशी दशमेऽपि ।**
**वसुधापतिर्यदि याति रिपुवाहिनी वशमेति ॥६४॥**

भावार्थः- लग्नमा सूर्य, छैटौं स्थानमा शनि र दशौं स्थानमा चन्द्रमा हुँदा युद्धयात्रामा निस्केको राजाका शत्रुका सेना अधिनमा हुने गर्दछन् ।

**तनौ शनिकुजौ रविर्दशमभे बुधो भृगुसुतोऽपि लाभदशमे ।**
**त्रिलाभरिपुभेषु भूसुतशनी गुरुज्ञभृगुजास्तथा बलयुताः ॥६५॥**



भावार्थः- लग्नमा शनि र मङ्गल, दशौं स्थानमा सूर्य तथा दशौं वा एघारौं स्थानमा बुध वा शुक्र हुँदाको योगमा युद्धयात्रामा निस्कने राजाको विजय हुन्छ । अथवा तेश्रो, छैटौं वा एघारौं स्थानमध्ये कुनैमा मङ्गल र शनिश्चर छन् तथा बृहस्पति, बुध र शुक्र बलियो भई कतै बसेका छन् भने उक्त योगमा युद्धयात्रामा निस्कने राजाले जित हासिल गर्दछ ।

**समुदयगे विबुधगुरौ मदनगते हिमकिरणे ।**
**हिबुकगतौ बुधभृगुजौ सहजगताः खलखचराः ॥६६॥**

भावार्थः- बृहस्पति लग्नमा, चन्द्रमा सातौं स्थानमा तथा बुध र शुक्र चौथो स्थानमा अनि पापग्रह तेश्रो स्थानमा हुँदा युद्ध यात्रामा निस्कने राजाको जित हुन्छ ।

**त्रिदशगुरुस्तनुगो मदने हिमकिरणो रविरायगतः ।**
**सितशशिजावपि कर्मगतौ रविसुतभूमिसुतौ सहजे ॥६७॥**

भावार्थः- लग्नमा बृहस्पति, सातौँ स्थानमा चन्द्रमा, एघारौँ स्थानमा सूर्य, दशौँ स्थानमा शुक्र र बुध तथा तेश्रो स्थानमा शनि र मङ्गल भएका बेलामा यात्रामा निस्कने राजाका शत्रु अधिनमा हुन्छन् ।

**देवगुरौ वा शशिनि तनुस्थे वासरनाथे रिपुभवनस्थे ।**
**पञ्चमगेहे हिमकरपुत्रः कर्मणि सौरिः सुहृदि सितश्च ॥६८॥**

भावार्थः- लग्नमा बृहस्पति वा शुक्र, छैटौँ स्थानमा सूर्य, पाँचौँ स्थानमा बुध, दशौँ स्थानमा शनि र चौथो स्थानमा शुक्र हुँदाको योगमा युद्ध यात्रामा निस्कने राजाको यात्रा आमा समान हितकारिणी हुन्छ अर्थात् वियदायक हुन्छ ।



**हिमकिरणसुतो बली चेत्तनौ त्रिदशपतिगुरुर्हि केन्द्रस्थितः ।**
**व्ययगृहसहजारिधर्मस्थितो यदि च भवति निर्बलश्चन्द्रमाः ॥६९॥**

भावार्थः- बुध बलियो भएर लग्नमा, बृहस्पति केन्द्रमा तथा निर्बल चन्द्रमा १२।३।६।९ मध्ये कुनै एकमा हुँदा यात्रामा निस्कने राजाको युद्धमा जित हुन्छ ।

**अशुभखगैरनवाष्टमदस्थैर्हिबुकसहोदरलाभगृहस्थः ।**
**कविरिह केन्द्रगगीष्पतिदृष्टो वसुचयलाभकरः खलु योगः ॥७०॥**

भावार्थः- ९।८।७ बाहेकका स्थानमा पापग्रह भई ४।३।११ मा बसेको शुक्रलाई बृहस्पतिले देख्दा यात्रा गर्नेले धनराशि प्राप्त गर्दछ ।

**रिपुलग्नकर्महिबुके शशिजे परिवीक्षिते शुभनभोगमनैः ।**
**व्ययलग्नमन्मथगृहेषु जयः परिवर्जितेष्वशुभनामधरैः ॥७१॥**

भावार्थः- ६।१० वा ४ स्थानमा भएको बुधलाई शुभग्रहले हेरेको छ अनि लग्न १२ र ७ बाहेकका स्थानमा शुभग्रह छन् भने उक्त योगमा यात्रामा निस्कने राजाले विजय प्राप्त गर्दछ ।

**लग्ने यदि जीवः पापा यदिलाभे कर्मण्यपि चेद्राज्याधिगमः स्यात् ।**
**द्यूने बुधशुक्रौ चन्द्रो हिबुके वा तद्वत्फलमुक्तं सर्वैर्मुनिवर्यैः ॥७२॥**



भावार्थः- लग्नमा बृहस्पति तथा ११।१० मा पापग्रह हुँदाको यात्राले राजालाई राज्य प्राप्त हुन्छ । बुध र शुक्र सातौं स्थानमा र चन्द्रमा चौथो स्थानमा हुँदा गरिने यात्रामा पनि राजालाई राज्य प्राप्त हुन्छ ।

**रिपुतनुनिधने शुक्रजीवेन्दवो ह्यथ बुधभृगुजौ तुर्यगेहस्थितौ ।**
**मदनभवनगश्चन्द्रमा वाम्बुगः शशिसुतभृगुगुजान्र्गतश्चन्द्रमाः ॥७३॥**

भावार्थः- लग्नमा बृहस्पति, छैटौं स्थानमा शुक्र, आठौं स्थानमा चन्द्रमा, चौथो स्थानमा बुध र शुक्र, सातौं स्थानमा चन्द्रमा अथवा चौथो स्थानका चन्द्रमा बुध र शुक्रका बीचमा हुँदाको योगमा गरिने यात्रा विजयदायक हुन्छ ।

सितजीवभौमबुधभानुतनूजास्तनुमन्मथारिहिबुकत्रिगृहे चेत् ।
क्रमतोऽरिसोदरखशात्रवहोराहिबुकायगैर्गुरुदिनेऽखिलखेटैः ॥७४॥

भावार्थः- लग्नमा शुक्र, सातौँ स्थानमा बृहस्पति, छैटौँ स्थानमा कङ्गल, चौथो स्थानमा बुध, तेश्रोमा शनि हुँदाको बिहीबार अथवा छैटौँमा सूर्य, तेश्रोमा चन्द्रमा, दशौँमा मङ्गल, छैटौँमा बुध, लग्नमा बृहस्पति, चौथोमा शुक्र र एघारौँमा शनि हुँदा गरिने यात्राले राजालाई जित दिन्छ ।

सहजे कुजो निधनगश्च भार्गवो मदने बुधो रविररौ तनौ गुरुः ।
अथ चेत्स्युरिज्यसितभानवो जलत्रिगता हि सौरिरुधिरौ रिपुस्थितौ ॥७५॥

भावार्थः- तेश्रोमा मङ्गल, आठौँमा शुक्र, सातौँमा बुध, छैटौँमा सूर्य र लग्नमा बृहस्पति हुँदा अथवा बृहस्पति, शुक्रर सूर्य चौथो वा तेश्रो स्थानमा भई शनि र मङ्गल छैटौँमा हुँदा गरिने यात्राले पनि राजालाई विजय दिन्छ ।



एको ज्ञेज्यसितेषु पञ्चमतपःकेन्द्रेषु योगस्तथा
द्वौ चेत्तेष्वधियोग एषु सकला योगाधियोगः स्मृतः ।
योगे क्षेममथाधियोगगमने क्षेमं रिपूणां वधं
चाथो क्षेमयशोऽवनीश्च लभते योगाधियोगे व्रजन् ॥७६॥

भावार्थः- ५।९।१।४।७।१० मा बुध, बृहस्पति र शुक्रमध्ये एक हुँदा त्यो योग हुन्छ । यिनमा दुई ग्रह एकसाथ वा बेग्लाबेग्लै हुँदा त्यो अधियोग हुन्छ । गिनमा तीन वटा ग्रह सँगै बैग्लाबेग्लै हुँदा त्यो योगाधियोग हुन्छ । योगमा यात्रा गर्नाले

कुशल, अधियोगमा यात्रा गर्नाले कुशल र शत्रुनाश तथा योगाधियोगमा यात्रा गर्नाले कुशल, यशप्राप्ति र पृथ्वीको प्राप्ति हुन्छ ।

### यात्रामा शुभ तिथिहरु

**इषमासि सिता दशमी विजया शुभकर्मसु सिद्धिकरी कथिता ।**
**श्रवणर्क्षयुता सुतरां शुभदा नृपतेस्तु गमे जयसन्किरी ॥७७॥**

भावार्थः- असोज शुक्ल दशमीलाई विजया तिथि भनिन्छ । यो तिथि सबै शुभकर्ममा सफलता दिने हुन्छ भनिएको छ । यदि श्रवण नक्षत्रले सहित छ भने त झन् शुभ हुन्छ । राजाको यात्रामा विजय वा सम्झौता गराउने हुन्छ । वैश्य वर्ग यो तिथिलाई धेरै उत्तम मान्दछन् र धुमधामले लक्ष्मीको पूजा गर्दछन् ।



### मनमा धुकचुक गरेर यात्रा नगर्नू

**चेतोनिमित्तशकुनैरतिसुप्रशस्तैर्ज्ञात्वा विलग्नबलमुर्व्यधिपः प्रयाति ।**
**सिद्धिर्भवेदथ पुनः शकुनादितोऽपि चेतोविशुद्धिरधिका न च तां विनेयात् ॥७८॥**

भावार्थः- चित्तको शुद्धि, अङ्ग फरफराउने आदि शुभ सङ्केत सहित लग्नको बल जानेर यदि राजा यात्रा गर्दछ भने सोचेको कार्यसिद्धि हुन्छ । यिनमा शुभ साइतभन्दा पनि चित्तको शुद्धि उत्तम मानिन्छ । यसैले शुभ साइत भएर पनि यदि चित्त शुद्धि छैन भने यात्रा नगर्नू ।

### यात्रा गर्न नहुने दिन आदि

व्रतबन्धनदैवप्रतिष्ठाकरपीडोत्सवसूतकासमाप्तौ ।
न कदापि चलेदकालविद्युद्घनवर्षातुहिनेऽपि सप्तरात्रम् ॥७९॥

भावार्थः- उपनयनमा देवताको स्थापना गर्दा, विवाह-उत्सव आदिमा र जुठोसूतक छँदै कुनै पनि हालतमा यात्रा नगर्नू । त्यस्तै, कुसमयमा बिजुली चम्केमा वा पानी परेमा पनि १६८ घण्टासम्म यात्रा नगर्नू ।

### यात्रा विशेष

महीपतेरेकदिने पुरात् पुरे यदा भवेतां गमनप्रवशेकौ ।
भवारशूलप्रतिशुक्रयोगिनीर्विचारयेन्नैवकदापि पण्डितः ॥८०॥



भावार्थः- राजा उही दिन यात्रामा निस्की एही दिन कतै प्रवेश गर्ने भए पण्डितले नक्षत्रशूल, वारशूल, सामुन्नेका शुक्र, योगिनी आदि कुरा हेर्नु पर्दैन पञ्चाङ्ग शुद्धि मात्र हेरी यात्राको व्यवस्था मिलाउनू ।

### एकैदिनमा गरिने प्रवेश र यात्रा

यद्येकस्मिने दिवसे महीपतेर्निर्गमप्रवेशौ स्तः ।
तर्हि विचार्यः सुधिया प्रवशेकालो न यात्रिकस्तत्र ॥८१॥

भावार्थः- एकैदिन राजोको प्रवेश र यात्रा हुँदा त्यहाँ ज्योतिषीले प्रवेश समयको नै विचार गर्नू, यात्राकालको विचार गर्नु पर्दैन ।

## यात्रामा तीन नवमीको दोष

**प्रवेशान्निर्गमं तस्मात्प्रवेशं नवमे तिथौ ।**
**नक्षत्रे च तथा वारे नैव कुर्यात् कदाचन ॥८२॥**

भावार्थः- यात्रामा निस्कँदा जुन नक्षत्र, तिथि र बार हुन्छ यात्राबाट घर फर्कँदा त्यसबाट नवौं नक्षत्र, तिथि र बार कहिल्यै नपार्नू । (कतै यी दुवै कार्यमा नवमी तिथि नपार्नू भनेर समेत अर्थ लगाइएको पाइन्छ) ।

यात्राकालको कर्तव्य

**अग्निं हुत्वा देवतां पूजयित्वा नत्वा विप्रानर्चयित्वा दिगीशम् ।**
**दत्त्वा दानं ब्राह्मणेभ्ये दिगीशं ध्यात्वा चित्ते भूमिपालोऽधिगच्छेत् ॥८३॥**



भावार्थः- आगोमा होम हाली, आफ्ना इष्ट देवदेवी, ब्राह्मणहरू र दिशाका मालिकहरूलाई पूजा गरी ब्राह्मणहरूलाई दान दिएर मनमा दिशाका मालिककलाई सम्झँदै राजाले यात्रा शुरु गर्नू ।

यात्रा गर्नु अघि खानमा बारना

**कुल्माषांस्तिलतण्डुलानपि तथा माषांश्च गव्यं दधि**
**त्याज्यं दुग्धमथैणमांसमपरं तस्यैव रक्तं तथा ।**
**तद्वत् पायसमेव चाषपललं मार्गं च शाशं तथा**
**षाष्टिक्यं च प्रियङ्ग्वपूपमथवा चित्राण्डजान् सत्फलम् ॥८४॥**
**कौर्मं सारिकगौधिकं च पललं शाल्यं हविष्यं हया-**
**द्दृक्षे स्यात् कृसरान्नमुद्गमपि वा पिष्टं यवानां तथा ।**

**मत्स्यान्नं खलु चित्रितान्नमथ वा दध्यन्नमेवं क्रमाद्**
**भक्ष्याभक्ष्यमिदं विचार्य मतिमान् भक्षेत्तथाऽऽलोकयेत् ॥८५॥**

भावार्थः- अश्विनीमा कुल्माष (आधा भिजेको जौ वा मास, चामल मिसिएको मास), भरणीमा तिल मिसिएको चामल, कृत्तिकामा मास, रोहिणीमा गाईको दही, मृगशिरामा गाईको घिउ, आर्द्रामा गाईको दूध, पुनर्वसुमा हरिणको मासु, पुष्यमा हरिणको रगत, अश्लेषामा खीर, मघामा चाष ठेउवाको मासु, पूर्वाफाल्गुनीमा मृगको मासु, उत्तराफाल्गुनीमा खरायोको मासु, हस्तामा सठियाधानको भात, चित्रामा कागुनु, स्वातीमा पुवा, विशाखामा चित्रविचित्र चराको मासु, अनुराधामा सुन्दर फल, ज्येष्ठामा कछुवाको मासु, मूलमा मैनाको मासु, पूर्वाषाढामा गोहीको मासु, उत्तराषाढामा दुम्सको मासु, अभिजित्मा हविष्यान्न, श्रवणमा खिचडी, धनिष्ठामा मुँगी, शतभिषामा जौको रोटी, पूर्वभाद्रपदामा माछाभात, उत्तरभाद्रपदामा खिचडी, रेवतीमा दहीभात-यि पदार्थलाई देश-जाति-समय अनुसार खान हुने नहुने विचार गरी जुन खान हुन्छ त्यो खाएर र जुन खान हुँदैन त्यसलाई हेरेर वा सम्झेर वा छोएर बुद्धिमानले यात्रा गर्नु पर्दछ ।

**आज्यं तिलौदनं मत्स्यं पयश्चापि यथाक्रमम् ।**
**भक्षयेद् दोहदं दिश्यमाशां पूर्वादिकां व्रजेत् ॥८६॥**

भावार्थः- पूर्वतिरको यात्रामा घिउ, दक्षिणमा तिल मिसिएको भात, पश्चिममा माछा र उत्तरमा दूध पिएर यात्रा गर्नू (९६ औं श्लोक अनुसारको दोष लाग्दैन) ।

**रसालां पायसं काञ्चीं श्रृतं दुग्धं तथा दधि ।**
**पयोऽश्रृतं तिलान्नं च भक्षयेद् वारदोहदम् ॥८७॥**

भावार्थः- आइतबार रसाला (दही,मह,चिनी,मरिच,अदुवा,अलैंची आदि मिसाएर बनाइएको अचार आदि), सोमबार खीर, मङ्गलवार हलुवा, बुधबार तातो दूध, बिहीबार दही, शुक्रबार काँचो दूध र शनिबार तिल मिसाइएको भात खाएर यात्रा गर्नु । यो आवश्यकता पर्दा वारशूलका लागि हो ।

**पक्षादितोऽर्कदलतण्डुलवारिसर्पिः श्राणा हविष्यमपि हेमजलं त्वपूपम् ।**
**भुक्त्वा व्रजेद्रुचकमम्बु च धेनुमूत्रं यावान्नपायसगुडानसृगन्नमुद्गान् ॥८८॥**

भावार्थः- परेवामा आँकको पात, द्वितीयामा चौलानी, तृतीयामा घिउ, चतुर्थीमा इमली, पञ्चमीमा मुँगी, षष्ठीमा सुनपानी, सप्तमीमा पुवा, अष्टमीमा रुचक (बिमिरो ?), नवमीमा शुद्ध जल, दशमीमा गहुँत, एकादशीमा जौको चामल, द्वादशीमा खीर, त्रयोदशीमा शखर, चतुर्दशीमा रगत र पूर्णिमामा मुँग-भात खाएर यात्रा गर्नु पर्दछ । तिथिदोषको निवारणका लागि तिथिदोहदको प्रयोग गर्नू ।

यात्रामा निक्लँदा गर्नुपर्ने साइत

**उद्धृत्य प्रथमत एव दक्षिणाङ्घ्रिं**
**द्वात्रिंशत्पदमभिगत्य दिश्ययानम् ।**
**आरोहेत् तिलघृतहेमताम्रपात्रं**
**दत्त्वाऽऽदौ गणकवराय च प्रगच्छेद् ॥८९॥**

भावार्थः- यात्राकालमा पहिले दाहिने गोडा उचालेर ३२ पाइला हिँड्नू । त्यसपछि जुन दिशामा यात्रा गर्ने हो त्यतातिर जानू । त्यसपछि ज्योतिषीलाई तिल, घिउ, सुन, तामाका भाँडा दान दिई जाने ठाउँतिर जानू ।

### यात्रा गर्ने दिशा अनुसारका वाहन

**प्राच्यां गच्छेद्गजेनैव दक्षिणस्यां रथेन हि ।**
**दिशि प्रतीच्यामश्वेन तथोदीच्यां नरैर्नृपः ॥९०॥**

भावार्थः- राजाले पूर्वतिरको यात्रामा हात्ती, दक्षिणतिरको यात्रामा रथ, पश्चिमतिरको यात्रामा घोडा र उत्तरतिरको यात्रामा निस्कँदा नरवाहर (पालकी आदि) चढेर यात्रा गर्नू ।

### यात्रामा निस्कँदाका नियम

**देवगृहाद्वा गुरुसदनाद्वा स्वगृहान् मुख्यकलत्रगृहाद्वा ।**

**प्राश्य हविष्यं विप्रानुमतः पश्यन् श्रृण्वन् मङ्गलमेयात् ॥९१॥**

भावार्थः- राजाले देवालय, गुरुको घर, आफू सुत्ने घर अथवा धेरै पत्नी भए मूल पत्नीको घरबाट संस्कार गरिएको अन्न खाई ब्राह्मणहरूको आज्ञा लिई मङ्गलदायक कुरा हेर्दै र मङ्गलदायक आवाज सुन्दै यात्रा शुरु गर्नू ।

### यात्रामा ढिलाइ

**कार्याद्यैरिह गमनस्य चेद् विलम्बो भूदेवादिभिरुपवीतमायुधञ्च ।**
**क्षौद्रं चामलफलमाशु चालनीयं सर्वेषां भवति यदेव हृत्प्रियं वा ॥९२॥**

भावार्थः- यात्रा गर्ने समय निश्चय भएपछि कुनै कारणले यात्रा गर्न ढीला भए ब्राह्मणलाई जनै, क्षत्रीयलाई हतियार, वैश्यलाई मह तथा शुद्रलाई अमला प्रस्थानका क्रममा राखिदिनू अथवा जसलाई जे कुरा बढी प्यारो छ त्यही कुरा प्रस्थानका समयमा राखिदिनू ।

यात्राको परिभाषा

**गेहाद् गेहान्तरमपि गमस्तर्हि यात्रेति गर्गः**
**सीम्नः सीमान्तरमपि भृगुर्बाणविक्षेपमात्रम् ।**
**प्रस्थानं स्यादिति कथयतेऽथो भरद्वाज एवं**
**यात्रा कार्या बहिरिह पुरात् स्याद्वसिष्ठो ब्रवीति ॥९३॥**

भावार्थः- एक घरबाट अर्को घरमा जानुलाई यात्रा भनिन्छ भनी गर्गाचार्य भन्दछन् । भृगु एउटा सीमाबाट अर्को गाउँको सीमासम्म जानुलाई यात्रा भन्दछन् । फ्याँकिएको बाण जति पर गएर खस्दछ, त्यति पर जानुलाई यात्रा भनिन्छ भनी भारद्वाज भन्दछन् । यस्तै वसिष्ठको मतमा गाउँको सीमाभन्दा बाहिर जानु यात्रा हो ।



**प्रस्थानमत्र धनुषां हि शतानि पञ्च केचिच्छतद्वयमुशन्ति दशैव चान्ये ।**
**सम्प्रस्थितो य इह मन्दिरतः प्रयातो गन्तव्यदिक्षु तदपि प्रयतेन कार्यम् ॥९४॥**

भावार्थः- कोही आचार्य ५ सय धनुष (२ हजार हात) को दुरीको प्रस्थान राख्नु भन्दछन् । कोही २ सय धनुष (८ सय हात) को प्रस्थान राख्ने भन्दछन् । कसैले त १० धनुष (४० हात) को प्रस्थान राख्ने आदेश दिन्छन् । यात्रु जता जान चाहन्छ त्यही दिशामा जान कोशिस गर्नू ।

### यात्रामा बास

प्रस्थाने भूमिपालो दशदिवसमभिव्याप्य नैकत्र तिष्ठेत्
सामन्त सप्तरात्रं, तदितरमनुजः पञ्चरात्रं तथैव ।
ऊर्ध्वं गच्छेच्छुभाहेऽप्यथ गमनदिनात् सप्तरात्राणि पूर्वं
चाशक्तौ तद्दिनेऽसौ रिपुविजयमना मैथुनं नैव कुर्यात्॥९५॥

भावार्थः- यात्राका क्रममा स्वतन्त्र राजा दश दिनभन्दा बढी एउटै स्थानमा नबस्नू । सामन्त राजा सात दिनभन्दा बढी एकै ठाउँमा नबस्नू । सामान्य व्यक्ति भए पाँच दिनभन्दा बढी नबस्नू । कुनै कारणले यी नियम पालना गर्न नसक्दा फर्केर पुनः घरमा आई शुभ मुहूर्त्तमा यात्रा शुरु गर्नू । युद्धमा जित हासिल गर्न चाहने राजाले यात्रामा निस्कनुभन्दा सात दिन अघिदेखि ग्राम्यधर्ममा संलग्न नहुनू । यसो गर्न नसके पनि यात्रामा निस्कने दिन भने कुनै पनि हालतमा स्त्री-समागम नगर्नू ।



### यात्रामा निक्लनेले ध्यान दिनुपर्ने कुराहरू

दुग्धं त्याज्यं पूर्वमेव त्रिरात्रं क्षौरं त्याज्यं पञ्चरात्रं च पूर्वम् ।
क्षौद्रं तैलं वासरेऽस्मिन् वमिश्च त्याज्यं यत्नाद् भूमिपालेन नूनम्॥९६॥

भावार्थः- यात्रा गर्नुभन्दा ३ दिन अघिदेखि दूध पिउन, ५ रात अघिदेखि कपाल काट्न एवं यात्रा गर्ने दिन मह, तेल खान र वमन गर्न निश्चितरुपले त्याग्नू ।

**खान नहुने कुरा खाएको फल**

**भुक्त्वा गच्छति यदि चेद् तैलगुडक्षारपक्वमांसानि ।**
**विनिवर्तते स रुग्णः स्त्रीद्विजमवमान्य गच्छतो मरणम् ॥९७॥**

भावार्थः- जसले यात्राको दिन तेल, सखर तथा नुन आदि जस्ता क्षार पदार्थ तथा पकाइएको मासु खाएर यात्रा गर्दछ उ रोगी भएर फर्कन्छ । स्त्री तथा ब्राह्मणलाई अनादर गरी यात्रा गर्नेको मृत्यु हुन्छ ।

**अकाल वृष्टिसम्बन्धी दोष**

**यदि मास्सु चतुर्षु पौषमासादिषु वृष्टिर्हि भवेदकालवृष्टिः ।**

**पशुमर्त्यपदाङ्किता न यावद् वसुधा स्यान्न हि तावदत्र दोषः ॥९८॥**

भावार्थः- यदि पुसदेखि चैत महिनाभित्र पानी परे अकालवृष्टि भनिन्छ । तर जबसम्म पशु तथा मानिसका गोडाले पृथ्वीमा पाइला बन्दैन तबसम्म यो दोष हुँदैन । जब जमिनमा हिलो हुन्छ तब दोष हुन्छ ।

**अकाल वृष्टिदोषको परिमाण र शान्ति**

**अल्पायां वृष्टौ दोषोऽल्पो भूयस्यां दोषो भूयान्**
**जीमूतानां निर्घोषे वृष्टौ वा जातायां भूपः ।**
**सूर्येन्द्वोर्विम्बे सौवर्णे कृत्वा विप्रेभ्यो दद्यात्**
**दुःशाकुन्ये साज्यं स्वर्णं दत्वा गच्छेत् स्वेच्छाभिः ॥९९॥**

भावार्थः- कुबेलामा थोरै वर्षा भए कम र धेरै वर्षा भए बढी दोष हुन्छ । बेला न कुबेला बादल गर्जेमा वा पानी परेमा त्यो दोषलाई शान्त पार्न सुन वा चाँदीको सूर्य र चन्द्रमाको प्रतिमा बनाई ब्राह्मणलाई दान दिनु पर्दछ । यात्रामा अशुभ साइत देखिए घिउ र सुन दान दिई मन लागेको स्थानको यात्रा गर्नू ।

यात्रामा साइत

**विप्राश्वेभफलान्नदुग्धदधिगोसिद्धार्थपद्माम्बरं**
**वेश्यावाद्यमयूरचाषनकुला बद्धैकपश्वामिषम् ।**
**सद्वाक्यं कुसुमेक्षुपूर्णकलशच्छत्राणि मृत्कन्यका**
**रत्नोष्णीषसीतोक्षमद्यससुतस्त्रीदीप्तवैश्वानराः ॥१००॥**
**आदर्शाञ्जनधौतवस्त्ररजका मीनाज्यसिंहासनं**
**शावं रोदनवर्जितं ध्वजमधुच्छागास्त्रगोरोचनम् ।**
**भारद्वाजनृयानपेदनिनदा माङ्गल्यगीताङ्कुशा**
**दृष्टाःसत्फलदाःप्रयाणसमये रिक्तो घटःस्वानुगः ॥१०१॥**



भावार्थः- यात्राको बेला ब्राह्मण, घोडा, हाती, फल, अन्न, दूध, दही, गाई, सर्स्यूं, कमल, स्वच्छ वस्त्र, वेश्या, बाजा, मयूर, ठेउवा, नीलकण्ठ, न्याहुरीमुसो, बाँधिएको एउटा पशु, मासु, मङ्गल वचन, फूल, ऊखु, भरिएको गाग्रो, छाता, गिलो माटो, कुमारी केटी, रत्न, पगरी, सेतो साँढे, मदिरा, बालक लिएकी स्त्री, बलिरहेको आगो, ऐना, गाजल, धोइएको लुगा, धोबी, माछा, घिउ, सिंहासन, रुदन नभएको लाश, ध्वाजापताका, मह, बोको, हतियार, गोरोचन, भारद्वाज चरा, पालकी, वेदको ध्वनी, मङ्गल गीत, र अङ्कुश अगाडि देखिए शुभ हुन्छ र पछिल्तिर आउँदै गरेको रित्तो घडा पनि शुभ हुन्छ ।

**वन्ध्याचर्मतुषास्थिसर्पलवणाङ्गारेन्धनक्लीबविट्-**
**तैलोन्मत्तवसौषधारिजटिलप्रवाट्तृणव्याधिताः ।**
**नग्नाभ्यक्तविमुक्तकेशपतितव्यङ्गक्षुधार्ता असृक्**
**स्त्रीपुष्पं सरठः स्वगेहदहनं मार्जारयुद्धं क्षुतम् ॥१०२॥**
**काषायी गुडतक्रपङ्कविधवा कुब्जाः कुटुम्बे कलि-**
**र्वस्त्रादेः स्खलनं लुलायसमरं कृष्णानि धान्यानि (दि) च ।**
**कार्पासं वमनं च गर्दभरवो दक्षेऽतिरुङ्गर्भिणी**
**मुण्डार्द्राम्बरदुर्वचोन्धबधिरोदक्या न दृष्टाः शुभाः ॥१०३॥**

भावार्थः- बाँझी आइमाई, छाला, भूस, हाड, सर्प, नुन, अँगार, इन्धन (दाउरा आदि), नपुंसक, दिसा, तेल, पागल, चर्पी, औषधी, शत्रु, जटाधारी सन्यासी, घाँस, रोगी, नग्न व्यक्ति (वालक बाहेक), बुकुवा लगाएको, खुला कपाल, पतित, अङ्गहीन, भोकले पिडित मानिस, रगत, आईमाईको रज, छेपारो, आफ्नो घरको आगलागि, बिरालोको झगडा, हाच्छिउँ, गेरु कपडा लगाउने सन्यासी, सखर, मही, हिलो, विधवा, कुब्जो, पारिवारिक कलह, शरीरबाट कपडा खस्नु, भैंसी जुधेको, कालो धान-तिल-उडद आदि, कपास, वमन, दाहिनेतिरबाट आएको गधाको आवाज, अति रिसाहा, गर्भिणी स्त्री, कपाल खौरेको मानिस, भिजेको लुगा, गाली वा श्राप, अन्धो, बहिरो र परसरेकी आईमाई-यि कुरा यात्राको समयमा अगिल्तिर देखिए यात्रा शुभ हुँदैन, कष्ट हुन्छ वा असफलता हात लाग्छ ।



**गोधाजाहकसूकराहिशशकानां कीर्तनं शोभनं ।**
**नो शब्दो न विलोकनं च कपित्रृक्षाणामतो व्यत्ययः ।**

**नद्युत्तारभयप्रवेशसमरे नष्टार्थसंवीक्षणे**
**व्यत्यस्ताः शकुना नृपेक्षणविधौ यात्रोदिताः शोभनाः ॥१०४॥**

भावार्थः- गोही, कछुवा, सुँगुर, सर्प र खरायोको नाम सुन्नु वा भन्नु यात्रामा शुभ हुन्छ । तर यिनको आवाज सुन्नु वा यिनलाई देखिनु राम्रो हुँदैन । बाँदर र भालुको सम्बन्धमा भने यसको उल्टो हुन्छ । नदी तर्न, डराएर भाग्न, गृह प्रवेश गर्न तथा हराएका वस्तु खोज्ने खालका यात्रामा उल्टो साइत हुन्छ (अशुभ साइत शुभ हुन्छ) । राजाको दर्शन यात्रामा भने शुभ साइत शुभ र अशुभ साइत अशुभ नै हुन्छ ।

**वामाङ्गे कोकिला पल्ली पोतकी सूकरी रला ।**
**पिङ्गला छुच्छुका श्रेष्ठाः शिवाः पुरुषसञ्ज्ञिताः ॥१०५॥**



भावार्थः- कोइली, छेपारो, पोतकी ?, सुँगुर्नी, रल ।?, पिंगला ?, छुचुन्द्री, पोथी स्याल र पुरुषसंज्ञक चरा यात्रामा देब्रे परे उत्तम हुन्छ ।१०५।

**छिक्करः पिक्कको भासः श्रीकण्ठो वानरो रुरुः ।**
**स्त्रीसञ्ज्ञकाःकाकऋक्षश्वानःस्युर्दक्षिणाःशुभाः॥१०६॥**

भावार्थः- छिक्कर ?, पिक्कक ?, भास ?, श्रीकण्ठ ?, बाँदर, रुरु, स्त्रीनाका चरा, काग, भालु र कुकुर दाहिने देखिए शुभ हुन्छ ।१०६।

**प्रदक्षिणगताः श्रेष्ठाः यात्रायां मृगपक्षिणः ।**
**ओजा मृगा वैजन्तोऽतिधन्या  वामे खरस्वनः ॥१०७॥**

भावार्थः- यात्रामा मृग र चरा देब्रेबाट दाहिनेतिर गएको देखिए उत्तम हुन्छ । मृग बिजोर भए झन शुभ हुन्छ । गधाको स्वर देब्रे भए शुभ हुन्छ ।१०७।

**आद्येऽपशकुने स्थित्वा प्राणानेकादश व्रजेत् ।**
**द्वितीये षोडश प्राणांस्तृतीये न क्वचिद् व्रजेत्॥१०८॥**

भावार्थः- यात्रामा पहिलो कुसाइतमा ११ र दोश्रो कुसाइतमा १६ पटक सास लिइन्जेल कुर्नू तर तेश्रो पटक कुसाइत परे यात्रा नगर्नू ।१०८।

**यात्राबाट फर्की घर प्रवेश गर्दाको साइत**

**यात्रानिवृत्तौ शुभदं प्रवेशनं मृदु-ध्रुवैः क्षिप्र-चरैः पुनर्गमः ।**
**द्वीशेऽनले दारुणभे तथोग्रभे स्त्रीगेहपुत्रात्मविनाशनं क्रमात्॥१०९॥**



भावार्थः- मृदु र ध्रुव संज्ञक नक्षत्रमा गृहप्रवेश शुभ हुन्छ । क्षिप्र र चर संज्ञक नक्षत्रमा गृहप्रवेश गरे पुनः यात्रा गर्नुपर्ने हुन्छ । यसैगरी विशाखामा प्रवेश गरे स्त्री-हानी, कृत्तिकामा घरको नाश, दारुण नक्षत्रमा पुत्र नाश र उग्र नक्षत्रमा प्रवशे गर्नाले आफ्नै नाश हुने सम्भावना हुन्छ ।

**यात्रामा दोष**

**अयनर्क्षमासतिथिकालवासरोद्भवशूलसम्मुखसितज्ञदिक्कपाः ।**
**भृगुवक्रतादिपरिघाख्यदण्डका युवतीरजोऽप्यशुचितोत्सवादिकम्॥११०॥**
**मृतपक्षरिक्तरवितर्कसङ्ख्यका तिथयश्च सौरिरविभौमवासराः ।**
**अपि वामपृष्ठगविधुस्तथाडलो वसुपञ्चकाभिजिदथापि दक्षिणे॥१११॥**

भावार्थः- अयनदोष, ऋक्षदोष, मासदोष, तिथिदोष, कालदोष, सन्मुख शुक्र-बुध-दिशेश, शुक्रको वक्रादि दोष, परिघदण्ड, स्त्रीको रजोदर्शन, सूतक, जुठो, विवाह, व्रतबन्ध, मृतपक्ष, रिक्ता, द्वादशी, षष्ठी, शनिबार, आइतबार, मङ्गलबार, देब्रे वा पछिल्तिरका चन्द्र-महाडल, दक्षिण यात्राको लागि धनिष्ठा आदि ५ नक्षत्र अभिजित मुहूर्त-यी सबै यात्रामा वर्जित हुन्छ ।

**लग्नेजन्मर्क्षतन्वोर्मृतिगृहमहितर्क्षाच्च षष्ठं तदीशा**
**वा लग्ने कुम्भमीनर्क्षनवलवतनू चापि पृष्ठोदयं च ।**
**पृष्ठाशासंस्थमृक्षं दशमशनिरथो सप्तमे चापि काव्यः**
**केन्द्रे वक्राश्च वक्रिग्रहदिवसविवाहोक्तदोषाश्च नेष्टाः ॥११२॥**

भावार्थः- आफ्नो जन्मराशि वा जन्मलग्नबाट आठौँ र शत्रुको जन्मलग्न, जन्मराशिबाट छैटौँ राशि वा त्यसको स्वामी यात्रा लग्नमा परे यात्रा त्याज्य हुन्छ । कुम्भ वा मीन राशि वा तिनको नवांश, पृष्ठोदय राशिहरु, पृष्ठ दिशाका राशिहरु, दशौँ स्थानको शनि, सातौँको शुक्र, केन्द्रमा वक्रीग्रह वा वक्रीग्रहको दिन तथा विवाहमा बताइएका सबै दोष यात्रामा वर्जित हुन्छ ।

**इति मुहूर्त्तचिन्तामणौ यात्राप्रकरणं समाप्तम्**

# वास्तुप्रकरणम्

### बस्ने गाउँको चयन

यद्भं द्व्यङ्कसुतेशदिङ्मितमसौ ग्रामः शुभो नामभात्
स्वं वर्गं द्विगुणं विधाय परवर्गाढ्यं गजैःशेषितम् ।
काकिण्यस्त्वनयोश्च तद् विवरतो यस्याधिकाः सोर्थदो-
ऽथ द्वारं द्विजवैश्यशूद्रनृपराशीनां हितं पूर्वतः ॥१॥

भावार्थः- बस्न चाहने व्यक्तिको नामराशिबाट जुन गाउँको राशि २।९।८।११।१० छ त्यो गाउँ उसका लागि उत्तम हुन्छ नत्र अशुभ हुन्छ । आफ्नो वर्गको संख्यालाई दोबर गरी गाउँको वर्गसंख्या जोडेर ८ ले भाग गर्दा जति शेष रहन्छ त्यो पुरुषको काकिणी संख्या हुन्छ । गाउँको वर्गसंख्यालाई दोबर गरी त्यसमा व्यक्तिको वर्गसंख्यालाई जोडेर ८ ले भाग गर्दा गाउँको काकिणी हुन्छ । यी दुई काकिणीमध्ये जुन धेरै हुन्छ त्यो धन दिने हुन्छ । गाउँको काकिणी अधिक भए त्यो गाउँ शुभ र नभए अशुभ समझिनू ।



### गाउँमा बस्ने स्थानको चयन

गोसिंहनक्रमिथुनं निवसेन्न मध्ये ग्रामस्य पूर्वककुभोऽलिझषाङ्गनाश्च ।
कर्कौ धनुस्तुलमेषघटाश्च तद्वद्वर्गाःस्वपञ्चमपरा बलिनः स्युरैन्द्र्याः ॥२॥

भावार्थः- गाउँलाई नौ भाग लगाएको कल्पना गरी वृष-सिंह-मकर-मिथुन राशिका व्यक्तिले गाउँको बिचमा नबस्नू । त्यसैगरी पूर्व आदि दिशामा क्रमैले

८।१२।६।४।९।७।१।११ राशि हुनेले पूर्व देखि नैर्ऋत्य हुँदै क्रमशः बस्नु अशुभ हुन्छ । अकार आदि वर्ग पूर्व आदि दिशामा बलिया हुन्छन् र आफूबाट पाँचौं शत्रु हुन्छन् ।

### क्षेत्रफल निकाल्ने तरिका

एकोनितेष्टर्क्षहता द्वितिथ्यो रूपोनितेष्टायहतेन्दुनागैः ।
युक्ता घनैश्चापि युता विभक्ता भूपाश्विभिः शेषमितो हि पिण्डः ॥३॥
स्वेष्टायनक्षत्रभवोथ दैर्घ्यहृत् स्याद् विस्तृतिर्विस्तृतिहृच्च दीर्घता ।

भावार्थः- इष्ट नक्षत्रको संख्यामा १ घटाएर आउने अङ्कलाई १५२ ले गुणन गर्नू । इष्ट आयको संख्यामा १ घटाएर ८१ ले गुणन गर्नू । दुवै गुणनफलको जोडमा १७ जोडी २१६ ले भाग गर्नू । जति शेष रहन्छ त्यही इष्ट नक्षत्र र इष्ट आयबाट उत्पन्न क्षेत्रफल हुन्छ । क्षेत्रफललाई लम्बाईले भाग गर्दा चौडाई र चौडाईले भाग गर्दा लम्बाई हुन्छ ।



| | |
|---|---|
| गृहको क्षेत्रफल | (नक्षत्र संख्या—१)×१५२+(आयको संख्या—१)×८१+१७ |
| | २१६ |

### ढोकाको व्यवस्थापन

आया ध्वजो धूमहरिश्वगाखरेभध्वाङ्क्षकाः पिण्ड इहाष्टशेषिते ॥४॥
ध्वजादिकाः सर्वदिशि ध्वजे मुखं कार्यं हरौ पूर्वयमोत्तरे तथा ।
प्राच्यां वृषे प्राग्यमयोर्गजेऽथवा पश्चादुदक्पूर्वयमे द्विजादितः ॥५॥

भावार्थः- क्षेत्रफललाई ८ ले भागगर्दा बाँकी रहने शेष १ देखि क्रमैले ध्वज, धूम, सिंह, कुकुर, गाई, गधा, हाती र काक नामका आय हुन्छन् । ध्वज आय भए सबै दिशामा, सिंह आयमा पूर्व-दक्षिण-उत्तरमा, गौ आयमा पश्चिममा र हाती आयमा पूर्व-दक्षिणमा मूल ढोका बनाउनु राम्रो हुन्छ । त्यस्तै ब्राह्मणले ध्वज आयमा पश्चिमतिर, क्षत्रियले सिंह आयमा उत्तरतिर, वैश्यले गौ आयमा पूर्वतिर तथा शूद्रले हात्ती आयमा दक्षिणतिर घरको मूल ढोका बनाउनु उत्तम हुन्छ ।

**गृहारम्भमा ग्रहबल**

**गृहेशतत्स्त्रीसुखवित्तनाशोऽर्केन्द्वीज्यशुक्रे विबलेस्तऽनीचे ।**
**कर्त्तुः स्थितिर्नो विधुवास्तुनोर्भे पुरःस्थिते पृष्ठगते खनिः स्यात् ॥६॥**



भावार्थः- गृहारम्भका समयमा गृहस्वामीको जन्मराशिबाट गोचरोक्त विचारले यदि सूर्य निर्बल भए वा नीचराशि(तुला)का भए स्वामीको, चन्द्र निर्बल-अस्त-नीचराशि(वृश्चिक)का भए मालिक्नीको (अनुराधा बाहेक), बृहस्पति निर्बल-अस्त-नीचराशि(मकर)का भए मालिक-पुत्रको तथा शुक्र निर्बल-अस्त-नीचराशि(कन्या)का भए धनको नाश हुन्छ । त्यसैले गृहारम्भमा सूर्य, चन्द्र, बृहस्पति र शुक्र बलियो हुनु, उदाउनु र उच्च राशिमा वा उच्च राशिको नजिकमा हुनु आवश्यक हुन्छ । गृहारम्भकालिन चन्द्रमा र वास्तुको नक्षत्र घरको ढोकाको अघिल्तिर परे त्यो घरमा मालिकको स्थायी वास हुँदैन पछाडी परे चोरको डर हुन्छ ।

पूर्व

कृ. रो. मृ. आ. पुन. पु. आश्ले.

भ. म.

अ. पू.फा.

रे. उ.फा.

उ.भा. ह.

पू.भा. चि.

शत. स्वा.

ध. वि.

श्र. अभि. उ.षा. पू.षा. मू. ज्ये. अनु.

कृत्तिकाबाट ७ र अनुराधाबाट ७ नक्षत्रमा यदि गृहनक्षत्र र गृहारम्भ नक्षत्र परे पूर्वपश्चिम ढोका हुने भवनका लागि र मघाबाट ७ तथा धनिष्ठाबाट ७ नक्षत्रमा गृहनक्षत्र र गृहारम्भ नक्षत्र परे उत्तरदक्षिण ढोका हुने भवनका लागि अशुभ हुन्छ ।

**गृहको कल्पित नक्षत्र जुराउने काम**

**भं नागतष्टं व्यय ईरितोऽसौ ध्रुवादिनामाक्षरयुक् सपिण्डः ।**
**तष्टो गुणैरिन्द्रकृतान्तभूपा ह्यंशा भवेयुर्न शुभोऽतकोऽत्र ॥७॥**

भावार्थः- गृहको कल्पना गरिएको नक्षत्र संख्यालाई ८ ले भाग गरी जति शेष बच्दछ त्यसलाई व्यय भनिन्छ । व्ययमा १२।८-१० श्लोकमा भने बमोजिम ध्रुव, धान्य आदि गृहको नामाक्षर संख्या, पिण्ड संख्या र घरको क्षेत्रफल जोडी ३ ले भाग

१,२,३ शेष हुँदा  क्रमैले इन्द्र, यम, भूपको भवनमा अंश हुन्छ । यमको अंश परे अनिष्टकारक हुन्छ ।

### गृहको नाम

दिक्षु पूर्वादितः शालाध्रुवा भूद्वौ कृता गजाः ।
शालध्रुवाङ्कसंयोगः सैको वेश्म ध्रुवादिकम्॥८॥
तिथ्यर्काष्टाष्टिगोरुद्रशके नामाक्षरं त्रयम् ।
भूद्व्यब्धीष्वङ्गदिग्वह्निविश्वेषु द्वौ नगेऽब्धयः॥९॥
ध्रुवधान्ये जयनन्दौ खरकान्तमनोरमं सुमुखदुर्मुखोऽग्रं च ।
रिपुदं वित्तदं नाशं चाक्रन्दं विपुलविजयाख्यं स्यात्॥१०॥



भावार्थः- पूर्वमा घरको ढोका राख्ने भए शालाध्रुवाङ्क १, दक्षिणमा भए शालाध्रुवाङ्क २, पश्चिममा भए शालाध्रुवाङ्क ४ र उत्तरमा शालाध्रुवाङ्क ८ हुन्छ । जुन जुन दिशामा ढोका राख्ने हो त्यो त्यो दिशाको शालाध्रुवाङ्कको जोडमा १ जोडेर आउने अङ्क संख्या तुल्य नै त्यो घरको ध्रुवादि नाम हुन्छ ।८। १५।१२।८।१६।९।११।१४ औं घरको नाम ३ अक्षरको हुन्छ । १।२।४।५।६।१०।३।१३ औं घरको नाम २ अक्षरको र सातैं घरको नाम ४ अक्षरको हुन्छ । ध्रुव, धान्य, जय, नन्द, खर, कान्त, मनोरम, सुमुख, दुर्मुख, उग्र, रिपुद, वित्तद, नाश, आक्रन्द, विपुल र विजय : यी १६ क्रमैले गृहका नाम हुन् ।

गृहको क्षेत्रफलको आधारमा जुराउने काम

पिण्डे नवाङ्काङ्गगजाग्निनागनागाब्धिनागैर्गुणिते क्रमेण ।
विभाजिते नागनगाङ्कसूर्यनागर्क्षतिथ्यृक्षखभानुभिश्च ॥११॥
आयो वारोंऽशको द्रव्यमृणमृक्षं तिथिर्युतिः ।
आयुश्चाथ गृहेशर्क्षं गृहभैक्यं मृतिप्रदम् ॥१२॥

भावार्थः- घरको क्षेत्रफललाई ९ स्थानमा राख्नू । पहिलो स्थानको लाई ९ ले गुणन गरी ८ ले भाग गर्दा रहने शेष आय हुन्छ । यसै गरी दोश्रोलाई ९ ले गुणन गरी ७ ले भागगर्दा रहने शेष बार हुन्छ । तेश्रोलाई ६ ले गुणन गरी ९ ले भागगर्दा रहने शेष अंश हुन्छ । चौथोलाई ८ ले गुणन गरी १२ ले भागगर्दा रहने शेष द्रव्य हुन्छ । पाँचौंलाई ३ ले गुणन गरी ७ ले भागगर्दा रहने शेष ऋण हुन्छ । छैटौंलाई ८ ले गुणन गरी २७ ले भागगर्दा रहने शेष नक्षात्र हुन्छ । सातौंलाई ८ ले गुणन गरी १५ ले भागगर्दा रहने शेष तिथि हुन्छ । आठौंलाई ४ ले गुणन गरी २७ ले भागगर्दा रहने शेष विष्कम्भ आदि योग हुन्छ । नवौंलाई ८ ले गुणन गरी १२० ले भागगर्दा रहने शेष गृहायु हुन्छ । यसरी सबै विचार गरी गुण धेरै र दोष कम हुने क्षेत्रफल उत्तम हुन्छ ।

नक्षात्रानुसार गृहारम्भ मुहूर्त

गेहाद्यारम्भेऽर्कभाद्वत्सशीर्षे रामैर्दाहो वेदभैरग्रपादे ।
शून्यं वेदैः पृष्ठपादे स्थिरत्वं रामैः पृष्ठे श्रीयुगैर्दक्षकुक्षौ ॥१३॥
लाभो रामैः पुच्छगैः स्वामिनाशो वेदैर्नैःस्व्यं वामकुक्षौ मुखस्थैः ।
रामैः पीडा सन्ततं चार्कधिष्ण्यादश्वै रुद्रैर्दिग्भिरुक्तं ह्यसत्सत् ॥१४॥

भावार्थः- घरको आरम्भमा सूर्याक्रान्त नक्षत्रबाट चन्द्रमाको नक्षत्रसम्म गनेर पहिला ३ नक्षत्र वृषवास्तुको टाउकोमा कल्पना गर्नू । त्यसमा गृहारम्भ गर्नाले दाह हुन्छ । फेरी ४ नक्षत्र अगिल्लो पादमा शून्यफलप्रद हुन्छ । त्यसपछिका ४ नक्षत्र पछिल्लो पाउमा स्थिरता, फेरी ३ नक्षत्र पीठमा लक्ष्मीप्राप्ती, त्यसपछिका ४ नक्षत्र दाहिने कोखमा लाभप्रद, फेरी ३ नक्षत्र पुच्छरमा स्वामिनाश, त्यसपछिका ४ नक्षत्र देब्रे काखीमा निर्धनता, त्यसपछिका ३ नक्षत्र मुखमा सदा पीडा दिने हुन्छ । अर्थात सूर्यको नक्षत्रबाट ७।११।१० नक्षत्रमा गृहारम्भ गर्नाले क्रमशः अशुभ, शुभ, अशुभ फल हुन्छ ।

गृहद्वार, गृहरम्भ र सूतिका गृह

**कुम्भेर्के फाल्गुने प्रागपरमुखगृहं श्रावणे सिंहकर्क्योः**
**पौषे नक्रे च याम्योत्तरमुखसदनं गोऽजगेऽर्के च राधे ।**
**मार्गे जूकालिगे सद्ध्रुवमृदुवरुणस्वातिवस्वर्कपुष्यैः**
**सूतीगेहं त्वदित्यां हरिभविधिभयोस्तत्र शस्तःप्रवेशः ॥१५॥**

भावार्थः- कुम्भ राशिको सूर्य भए फागुनमा, कर्कट वा सिंह राशिको भए साउनमा तथा मकर राशिमा भए पुषमा घरको ढोका पूर्व वा पश्चिम दिशामा शुभ हुन्छ । यस्तै, मेष वा वृष राशिको सूर्य भए वैशाखमा तथा तुला वा वृश्चिक राशिको सूर्य भए मार्ग महिनामा उत्तर वा दक्षिणतिर ढोका बनाउनु उत्तम हुन्छ । तीनै उत्तरा, रोहिणी, मृगशिरा, रेवती, चित्रा, अनुराधा, शतभिषा, स्वाती, धनिष्ठा, हस्ता एवं पुष्य नक्षत्रमा घर बनाउन शुरु गर्नु उत्तम हुन्छ । पुनर्वसुमा सुतिकागृहको आरम्भ तथा श्रवण-अभिजितमा सूतिकागारमा प्रवेश उत्तम बताइन्छ ।

### गृहराम्भको अर्को साइत

**कैश्चिन्मेषरवौ मधौ वृषभगे ज्येष्ठे शुचौ कर्कटे**
**भाद्रे सिंहगते धटेऽश्वयुजि चोर्जेऽलौ मृगे पौषके ।**
**माघे नक्रघटे शुभं निगदितं गेहं तथोर्जे न सत्**
**कन्यायां च तपा धनुष्यपि न सत्कृष्णादिमासाद्भवेत् ॥१६॥**

भावार्थः- कुनै आचार्यको मतमा सूर्य मेषमा भए चैत्रमा, वृषमा भए जेठमा, कर्कटमा भए असारमा, सिंहमा भए भदौमा, तुलामा भए असौजमा, वृश्चिकमा भए कात्तिकमा, मकरमा भए पुषमा तथा मकर वा कुम्भमा भए माघमा गृहारम्भ शुभ हुन्छ भन्ने छ ।



### घर बनाउन शुरु गर्ने तिथि

**पूर्णेन्दुतः प्राग्वदनं नवम्यादिषूत्तरास्यं त्वथ पश्चिमास्यम् ।**
**दर्शादितः शुक्लदले नवम्यादौ दक्षिणास्यं न शुभं वदन्ति ॥१७॥**

भावार्थः- पूर्णिमादेखि कृष्ण अष्टमीसम्म पूर्व ढोकाको, कृष्णनवमी देखि चतुर्दशीसम्म उत्तर ढोकाको घर, औंसीदेखि शुक्लअष्टमीसम्म पश्चिम ढोकाको तथा शुक्लनवमीदेखि शुक्लचतुर्दशीसम्म दक्षिणतर्फ ढोका भएको घर बनाउनु पर्दछ ।

### घर बनाउन शुरु गर्ने तिथि, लग्न र वार

**भौमार्करिक्तामाद्यूने चरोनेऽङ्गे विपञ्चके: ।**
**व्यष्टान्त्यस्थैः शुभैर्गेहारम्भस्त्र्यायारिगैःखलैः ॥१८॥**

भावार्थः- मङ्गल एवं आइतबार तथा रिक्ता-औंसी-परेवा बाहेकका तिथि, चर र सिंह बाहेकका लग्नमा, आठौं र बाह्रौं बाहेकका स्थानमा शुभग्रह हुँदा तथा ३।६।११ स्थानमा पापग्रह हुँदा घर बनाउन शुरु गर्नु उत्तम हुन्छ ।

### खाल्टो खन्ने साइत

**देवालये गेहविधौ जलाशये राहोर्मुखं शम्भुदिशो विलोमतः ।**
**मीनार्कसिंहार्कमृगार्कतस्त्रिभे खाते मुखात् पृष्ठविदिक्छुभा भवेत् ॥१९॥**

भावार्थः- देवालयको मीन राशिदेखि, घरको सिंहराशिदेखि तथा जलाशयको आरम्भमा मकरबाट ३।३ राशिमा सूर्य रहँदा क्रमैले ईशानबाट उल्टो (ईशान, वायव्य, नैर्ऋत्य, आग्नेय) क्रममा राहुको मुख हुन्छ । राहुको पछिल्तिरको भागमा नै खाल्टो खन्न शुरु गर्नु पर्दछ ।

### घरमा कुवाको निर्माण

**कूपे वास्तोर्मध्यदेशेऽर्थनाशस्त्वैशान्त्यादौ पुष्टिरैश्वर्यवृद्धिः ।**
**सूनोर्नाशः स्त्रीविनाशो मृतिश्च सम्पत्पीडा शत्रुतः स्याच्च सौख्यम् ॥२०॥**

भावार्थः- घरको बीचमा कुवा बनाइए धननाश, ईशानमा पुष्टि, पूर्वमा ऐश्वर्य वृद्धि, आग्नेयमा पुत्रनाश, दक्षिणमा स्त्रीनाश, नैर्ऋत्यमा मृत्यु, पश्चिममा सम्पत्ति, वायव्यमा शत्रुपिडा र उत्तरमा सुख प्राप्त हुन्छ ।

**घरमा भान्छा आदि कोठाको निर्माण**

**स्नानाग्निपाकशयनास्त्रभुजश्च धान्यभाण्डारदैवतगृहाणि च पूर्वतः स्युः ।**
**तन्मध्यतस्तु मथनाज्यपुरीषविद्याभ्यासाख्यरोदनरतौषधसर्वधाम ॥२१॥**

भावार्थः- वास्तुभूमीको पूर्वतिर स्नानागार, आग्नेयमा भान्छा, दक्षिणमा शयनकक्ष, नैऋत्यमा शस्त्रागार, पश्चिममा भोजन, वायव्यमा अन्नागार, उत्तरमा भण्डार र ईशानमा देवगृह बनाउनु पर्दछ । पूर्व-आग्नेयका बीचमा मन्थन (दही,दूध) गृह, आग्नेय-दक्षिणको बीचमा घिउको, दक्षिण-नैर्ऋत्यको बिचमा विद्याभ्यासको, पश्चिम-वायव्यको बीचमा रोदनगृह, वायव्य-उत्तरको बीचमा मैथुनगृह, उत्तर-ईशानको बीचमा सर्वसङ्ग्रह र औषधालय बनाउनु पर्दछ । ( घर बनाउन पैसा वा जग्गा थोरै भए सुविधा अनुसारको घर बनाउनु उत्तम हुन्छ : अल्पे शक्तिभुवो यथारुचि गृह कुर्यात् ।)

पूर्व

| | | | | |
|---|---|---|---|---|
| देवता | सर्वसङ्ग्रह | स्नान | मथन | पाक |
| ओखतीमुलो | | | | घिउभण्डार |
| भण्डार | | आँगन | | शयनस्थल |
| स्त्रीप्रसङ्ग | | | | चर्पी |
| अन्न | सुत्ने | भोजन | विद्या अभ्यास | हातहतियार |

### घरको आयु

**जीवार्कविच्छुक्रशनैश्चरेषु लग्नारिजामित्रसुखत्रिगेषु ।**
**स्थितिः शतं स्याच्छरदां सिताकरिज्ये तनुत्र्यङ्गसुते शते द्वे ॥२२॥**
**लग्नाम्बरायेषु भृगुज्ञभानुभिः केन्द्रे गुरौ वर्षशतायुरालयः ।**
**बन्धौ गुरुर्व्योम्नि शशी कुजार्कजौ लाभे तदाऽशीतिसमायुरालयः ॥२३॥**

भावार्थः- गृहारम्भको बेलामा लग्नमा बृहस्पति, छैटौंमा सूर्य, सातौंमा बुध, चौथोमा शुक्र र तेश्रोमा शनि भए त्यो घरको स्थिति १०० वर्षको हुन्छ । लग्नमा शुक्र, तेश्रोमा सूर्य, छैटौंमा मङ्गल र पाँचौंमा बृहस्पति भए त्यो घरको स्थिति २०० वर्षको हुन्छ । गृहारम्भको बेलामा लग्नमा शुक्र, दशौंमा बुध, एघारौंमा सूर्य र केन्द्रमा बृहस्पति भए त्यो घरको स्थिति १०० वर्षको हुन्छ । चौथो स्थानमा बृहस्पति, दशौंमा चन्द्रमा, एघारौंमा मङ्गल र शनि दुवै भए त्यो घरको अवधि ८० वर्षको हुन्छ ।

### घरमा लक्ष्मीको वास

**स्वोच्चे शुक्रे लग्नगे वा गुरौ वेश्मगतेथवा ।**
**शनौ स्वोच्चे लाभगे वा लक्ष्म्या युक्तं चिरं गृहम् ॥२४॥**

भावार्थः- लग्नमा आफ्नो उच्चराशि(मीन)को शुक्र, चौथोमा आफ्नो उच्चराशि(कर्कट)को बृहस्पति तथा लाभस्थानमा आफ्नो उच्चराशि(तुला)को शनि भएको अवस्थामा शुरु गरिएको घर लामो समयसम्म लक्ष्मीले युक्त भई रहन्छ ।

**घर अरुको हातमा जाने साइत**

**द्यूनाम्बरे यदैकोऽपि परांशस्थो ग्रहो गृहम् ।**
**अब्दान्तः परहस्तस्थं कुर्याच्चेद्वर्णपोऽबलः ॥२५॥**

भावार्थः- आफ्नो शत्रुग्रहको नवमांशमा रहेको एउटा ग्रह पनि यदि गृहारम्भ लग्नबाट ७ वा १० स्थानमा बसेको भए तथा त्यो (गृहपति) को वर्णको स्वामी निर्बल छ भने त्यो स्थितिमा बनेको घर १ वर्ष भित्रै अर्काको हातमा जान्छ अर्थात त्यो घरको मालिक अर्को हुन्छ ।

**शुभ साइतमा बनाइएको घरका गुण**

**पुष्यध्रुवेन्दुहरिसर्पजलैः सजीवैस्तद्वासरेण च कृतं सुतराज्यदं स्यात् ।**
**द्वीशाश्वितक्षिवसुपाशिशिवैः सशुक्रैर्वारे सितस्य च गृहं धनधान्यदं स्यात् ॥२६॥**

भावार्थः- पुष्य, तीनै उत्तरा, रोहिणी, मृगशिरा, श्रवण, अश्लेषा र पूर्वाषाढा : यी ९ मध्ये कुनै नक्षत्रमा बृहस्पति भई बिहिबार परेको योगमा शुरु गरिएको घरले सन्तान र राज्य दिन्छ । विशाखा, अश्विनी, चित्रा, धनिष्ठा, शतभिषा र आर्द्रा : यी ६ मध्ये कुनैमा शुक्र छ र शुक्रबार नै परेको छ भने त्यसबेला बनेको घरले धनधान्य दिन्छ ।

**सारैः करेज्यान्त्यमघाम्बुमूलैः कौजेऽह्नि वेश्माग्निसुतार्तिदं स्यात् ।**
**सज्ञैः कदास्रार्यमतक्षहस्तैर्ज्ञस्यैव वारे सुखपुत्रदं स्यात् ॥२७॥**

भावार्थः- मङ्गलग्रहले युक्त हस्ता, पुष्य, रेवती, मघा, पूर्वाषाढा र मूल नक्षत्रमध्ये कुनै नक्षत्रमा मङ्गलबार नै बनाउन शुरु गरिएको घरले गृहस्वामीलाई अग्निभय र पुत्र-कष्ट दिन्छ । बुधले युक्त रोहिणी, अश्विनी, उत्तरा फाल्गुनी, चित्रा र हस्ता नक्षत्रमा बनाउन शुरु गरिएको घरले गृह-सुख र पुत्र-सुख दिन्छ ।

**अजैकपादहिर्बुध्न्यशक्रमित्रानिलान्तकैः ।**
**समन्दैर्मन्दवारे स्याद् रक्षोभूतयुतं गृहम् ॥२८॥**

भावार्थः- पूर्वभाद्रपदा, उत्तरभाद्रपदा, ज्येष्ठा, अनुराधा, स्वाती, भरणी : यी ६ मध्ये कुनै नक्षत्रमा शनि भई शनिबार पनि परेको समयमा बनाउन शुरु गरिएको घर राक्षस, भूत र पिशाचको वासस्थान हुन्छ ।



**घरको ढोका**

**सूर्यर्क्षाद्युगभैः शिरस्यथ फलं लक्ष्मीस्ततः क्रोणभै-**
**र्नागैरुद्वसनं ततो गजमितैः शाखासु सौख्यं भवेत् ।**
**देहल्यां गुणभैर्मृतिर्गृहपतेर्मध्यस्थितैर्वेदभैः**
**सौख्यं चक्रमिदं विलोक्य सुधिया द्वारं विधेयं शुभम् ॥२९॥**

भावार्थः- सूर्यको नक्षत्रबाट आजको नक्षत्रसम्म गनेर ४ वटा नक्षत्र शिरमा (ढोकाको) राख्नू जसमा ढोका बनाउँदा लक्ष्मी प्राप्ती हुन्छ । त्यसपछिका ८ नक्षत्र चार कुनामा राख्नू त्यसमा ढोका राख्दा घर बाहिरै बस्न मनलाग्ने हुन्छ । त्यसपछिका ८ नक्षत्र दुवै हातमा स्थापना गर्नू, त्यसमा ढोका राखे त्यो घरमा बस्ने सदा सुखी हुन्छन् । त्यसपछि ३ नक्षत्र ठेलाका हुन्, त्यसमा ढोका राखे

गृहपतिको मृत्यु हुन्छ । त्यसपछिका ४ नक्षत्र बीचमा हुन्छ र त्यसमा ढोका राखे सुख मिल्छ ।

इति मुहूर्त्तचिन्तामणौ वास्तुप्रकरणं समाप्तम्

# गृहप्रवेशप्रकरण

### गृहप्रवेश मुहूर्त्त

**सौम्यायने ज्येष्ठतपोऽन्त्यमाधवे यात्रानिवृत्तौ नृपतेर्नवे गृहे ।**
**स्याद् वेशनं द्वाःस्थमृदुध्रुवोडुभिजन्मर्क्षलग्नोपचयोदये स्थिरे**

भावार्थः- उत्तरायणमा; जेठ, माघ, फागुन र वैशाख महिनामा; घरको ढोकाको सामुन्नेका नक्षत्रमा; ध्रुव र मृदुसंज्ञक नक्षत्रमा; कर्ताको जन्मराशि एवं जन्मलग्नबाट उपचय (३।६।१०।११) राशि हुने तथा स्थिरराशि (२।५।८।११) भएको लग्नमा राजा यात्राबाट फर्की दरबारमा छिर्न तथा नयाँ बनाएको घरमा प्रवेश गर्नु उत्तम हुन्छ ।



### पुरानो नाशिएर नयाँ बनाइएको घरमा प्रवेश मुहूर्त

**जीर्णे गृहेऽग्न्यादिभयान्नवेऽपि मार्गोर्जयोः श्रावणिकेऽपि सत् स्यात् ।**
**वेशोऽम्बुपेज्यानिलवासवेषु नावश्यमस्तादिविचारणाऽत्र ॥२॥**

भावार्थः- पुरानो तथा आगो-जल-वायु-राजाबाट नष्ट भई नयाँ बनाइएको घरमा मार्ग-कार्तिक-साउन-वैशाख-जेठ-माघ-फागुनमा, शतभिषा-पुष्य- स्वाती-धनिष्ठा नक्षत्रमा प्रवेश गर्नु उत्तम हुन्छ । यस्तोमा बृहस्पति-शुक्र अस्त-वाल्य-वृद्धत्व, सिंह-मकरको बृहस्पति लुप्त संवत्सर आदि दोष विचार गर्न आवश्यक छैन ।

## घरमा प्रवेश गर्नु अघि वास्तुपूजा र भूतबलि

**मृदुध्रुवक्षिप्रचरेषु मूलभे वास्त्वर्चनं भूतबलिं च कारयेत् ।**
**त्रिकोणकेन्द्रायधनत्रिगैः शुभैर्लग्ने त्रिषष्ठायगतैश्च पापकैः ॥३॥**

भावार्थः- गृहप्रवेश अघि मृगशिरा, रेवती, चित्रा, अनुराधा, तीनै उत्तरा, रोहिणी, हस्ता, अश्विनी, पुष्य, स्वाती, पुनर्वसु, श्रवण, धनिष्ठा, शतभिषा र मूल नक्षत्रमा वास्तुपूजा र भूतबलि गर्नु पर्दछ । वास्तुपूजा पछि लग्नबाट केन्द्र, त्रिकोण तथा ११।२।३ मा शुभग्रह भएका लग्नमा, ३।६।११ मा पापग्रह भएको अवस्थामा...।

**शुद्धाम्बुरन्ध्रे विजनुर्भमृत्यौ व्यर्कारिरिक्ताचरदर्शचैत्रे ।**
**अग्रेऽम्बुपूर्णं कलशं द्विजाँश्च कृत्वा विशेद्वेश्म भकूटशुद्धम् ॥४॥**

भावार्थः- ...४।८ स्थान शुद्ध हुँदा (यिनमा कुनै ग्रह नहुँदा), ग्रहस्वामीको जन्मराशि तथा जन्मलग्नबाट आठौं राशिको प्रवेश लग्न नभएका अवस्थामा; आइतबार र मङ्गलबार नहुँदा, रिक्तातिथि नपर्दा, चरलग्न नपर्दा, औंसी र चैत महिनालाई छाडी अन्य तिथि बार आदिमा जजमानको भकूट शुद्ध हुँदा जलले भरिएका कलश र ब्राह्मणजनलाई अगि लगाई घरमा प्रवेश गर्नु शुभ हुन्छ ।

**वामो रविर्मृत्युसुतार्थलाभतोऽर्के पञ्चभे प्राग्वदनादिमन्दिरे ।**
**पूर्णातिथौ प्राग्वदने गृहे शुभो नन्दादिके याम्यजलोत्तरानने ॥५॥**

भावार्थः- पूर्वतिर मूल ढोका भएको घरमा प्रवेश गर्न आठौंदेखि पाँच स्थान ( ८।९।१०।११।१२) मा, दक्षिण फर्केकाको पाँचौंबाट ५ स्थान (५।६।७।८।९)

मा, पश्चिम फर्केकाको दोश्रोबाट ५ स्थान (२।३।४।५।६) मा तथा उत्तर फर्केका घरमा प्रवेश गर्न एघारौंबाट ५ स्थान (११।१२।१।२।३) मा सूर्य भए वामरवि हुन्छ । प्रवेशमा वामरवि अति शुभ हुन्छ । पूर्णातिथिमा पूर्वमुखी, नन्दामा दक्षिणमुखी, भद्रामा पश्चिममुखी तथा जयामा उत्तरमुखी घरमा प्रवेश गर्नु उत्तम हुन्छ ।

**नयाँ घरमा प्रवेशमा कुम्भ चक्र**

**वक्त्रे भू रविभात् प्रवेशसमये कुम्भेग्निदाहः कृताः**
**प्राच्यामुद्वसनं कृता यमगता लाभः कृताः पश्चिमे ।**
**श्रीर्वेदाः कलिरुत्तरे युगमिता गर्भे विनाशो गुदे**
**रामाः स्थैर्यमतः स्थिरत्वमनलाः कण्ठे भवेत् सर्वदा ॥६॥**



भावार्थः- सूर्यनक्षत्रबाट प्रवेशकालिन नक्षात्रसम्म गनी १ नक्षात्र मुखमा अग्निदाहको ८ र ४ नक्षात्र पूर्वमा स्वामीको घरमा उद्वास, ४ नक्षात्र दक्षिणमा लाभ, ४ नक्षात्र पश्चिममा लक्ष्मीदायक, ४ नक्षात्र उत्तरमा कलह, ४ नक्षात्र गर्भमा नाशकारक, ३ नक्षात्र गुदामा स्थिरता र ३ नक्षात्र कण्ठमा स्थिरता प्रदायक हुन्छन् ।

**नयाँ घरमा प्रवेश गर्ने समयमा गर्ने कुराहरु**

**एवं सुलग्ने स्वगृहं प्रविश्य वितानपुष्पश्रुतिघोषयुक्तम् ।**
**शिल्पज्ञदैवविधिज्ञपौरान् राजाऽर्चयेद् भूमिहिरण्यवस्त्रैः ॥७॥**

**भावार्थः-** यसरी सुन्दर लग्नमा आफ्नो घरमा चँदुवा, वेदध्वनी, फूलमाला सहित प्रवेश गरी कालिगढ, ज्यौतिष, विधिविधानका जानिफकार तथा आचार्य-पुरोहितलाई जमिन-सुन-गाई-वस्त्र-आभूषणले पूजा गरी तिनबाट शुभकामनाको चाहना गर्नू ।

इति मुहूर्त्तचिन्तामणौ गृहप्रवेशप्रकरणं समाप्तम्

## वास्तुपूजाको ८१ कोठा

पूर्व

६१ (ईशान) — ५४ इन्द्र — ५५ अग्नि

४६ चरक्ये(धूम्र), ६२ ब्रह्मा — ५० स्कन्द (रक्त) — ४७ विदारकी (रक्त)

| | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|
| ५३.पिलिपिच्छ (पहेंलो) । ६०.सोम (उत्तर) | १. जयन्त (रातो) | २. पर्जन्य (पहेंलो) | ३. जयन्त (पहेंलो) | ४.इन्द्र (पहेंलो) | ५.सूर्य (पहेंलो) | ६.सत्य (सेतो) | ७.भृश (कालो) | ८.आकाश (कालो) | ९.वायु (धूम्र) | ५१.अर्यमा (कालो) । ५६ यम(कालो) (दक्षिण) |
| | ३२.दिति (पहेंलो) | ३३.आप (सेतो) | ३.जयन्त (पहेंलो) | ४.इन्द्र (पहेंलो) | ५.सूर्य (पहेंलो) | ६.सत्य (सेतो) | ७.भृश (कालो) | ३४.सावित्र (सेतो) | १०.पू.षा. (रातो) | |
| | ३१.अदिति (पहेंलो) | ३१.अदिति (पहेंलो) | ४४.आपवत्स (सेतो) | ३७.अर्यमा (कालो) | ३७.अर्यमा (कालो) | ३७.अर्यमा (कालो) | ३८.सविता (रातो) | ११.वितथ (सेतो) | ११.वितथ (सेतो) | |
| | ३०.सर्प (कालो) | ३०.सर्प (कालो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १२.गृहक्षत (पहेंलो) | १२.गृहक्षत (पहेंलो) | |
| | २९.सोम (सेतो) | २९.सोम (सेतो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १३.यम (कालो) | १३.यम (कालो) | |
| | २८.मल्लाट (कालो) | २८.मल्लाट (कालो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १४.गन्धर्व (रातो) | १४.गन्धर्व (रातो) | |
| | २७.मुख्य (रातो) | २७.मुख्य (रातो) | ४२.राजयक्ष्मा (रातो) | ४१.मित्र (सेतो) | ४१.मित्र (सेतो) | ४१.मित्र (सेतो) | ४०.इन्द्र (रातो) | १५.भृंगराज (कालो) | १५.भृंगराज (कालो) | |
| | २६.अहि (रातो) | ३६.रुद्र (रातो) | २३.शोष (कालो) | २२.असुर (पहेंलो) | २१.वरुण (सेतो) | २०.पुष्पदन्त (रातो) | १९.सुग्रीव (सेतो) | ३५.जय (सेतो) | १६.मृग (पहेंलो) | |
| | २५.रोग (रातो) | २४.पाप (पहेंलो) | २३.शोष (कालो) | २२.असुर (पहेंलो) | २१.वरुण (सेतो) | २०.पुष्पदन्त (रातो) | १९.सुग्रीव (सेतो) | १८.दौवारिक (रातो) | १७.पितर (रातो) | |



४९. पूर्व राक्षसी (धूम्र) — ५२. जृम्भक(रातो) — ६३.अनन्त — ४८.पूतना (पहेंलो)

५९.वायु — ५८. वरुण (सेतो) — ५७. निर्ऋति

पश्चिम